# सामुदायिक रेडियो
# सफलताका कथ्य प्रमाण



सामुदायिक रेडियो सहयोग केन्द्र
नेपाल वातावरण पत्रकार समूह

## सामुदायिक रेडियो

# सफलताका कथ्य प्रमाण

सम्पादन
रघु मैनाली
भुपराज खड्का

सामुदायिक रेडियो सहयोग केन्द्र
नेपाल वातावरण पत्रकार समूह

सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूहले
युनेस्को आईपीडीसी ग्रामीण सञ्चार पुरस्कार २०१२ प्राप्त गरेको छ ।

सामुदायिक रेडियोः सफलताका कथ्य प्रमाण
सम्पादनः रघु मैनाली र भुपराज खड्का
पहिलो संस्करण : सन् २०१२
**प्रकाशक**
सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूह
थापाथली, काठमाडौं ।
फोन नं : ०१-४२५९६०५, ४२६०२४८
Email: crsc@nefej.org.np
Web: www.nefej.org

ISBN: 978-9937-2-4889-1

OPEN SOCIETY FOUNDATIONS यो पुस्तक ओपन सोसाईटी फाउन्डेसन (Open Society Foundation) को सहयोगमा प्रकाशित भएको हो ।

# विषयसूचि

# भुमिका

सामुदायिक रेडियो लोकतान्त्रिक समाजमा बहुलवादी सञ्चार वातावरणको अभिन्न अङ्ग हो। लोकसेवी तथा व्यापारिक प्रशारण माध्यमको विकल्पमा सामाजिक सम्वाद कायम गर्दै वास्तविक सार्वजनिक दायरा निर्माण गर्न सामुदायिक रेडियो विश्वभरि नै सफल भैसकेको छ। आजको विश्वमा सामुदायिक रेडियो समाज परिवर्तनका लागि अभुतपूर्व माध्यमको रुपमा क्रियाशिल भइरहेको तथ्यप्रति कुनै पनि शङ्का छैन।

नेपालमा सामुदायिक रेडियो स्थापना भएको करिव डेढ दशक भयो। नेपाल वातावरण पत्रकार समूहको पहलमा २०५४ रेडियो सगरमाथाको स्थापनासँगै नेपालमा सामुदायिक रेडियो अभियानले गति लियो। यो डेढ दशको अवधिमा मुलुकभरि स्वतन्त्र सामुदायिक रेडियोको सङ्ख्या करिब दुई सय नाघिसकेको छ। यो *सामुदायिक रेडियो: सफलताका कथ्य प्रमाण* सामुदायिक रेडियो विकासको यस अवधिमा नेपाली सामुदायिक रेडियोहरूले देशका विभिन्न ठाउँमा सामुदायिक विकास र समाज परिवर्तनका लागि निर्वाह गरेको भुमिकाका कथ्य प्रमाणहरूले भरिएको छ। यो प्रकाशनको मुल ध्येय सामुदायिक रेडियो सञ्चालकहरूमा उत्प्रेरणा थप्नुका साथै नीति निर्माता तथा अन्य सरोकारवालाहरूलाई सामुदायिक रेडियोको आवश्यकता वोध गराउनु रहेको छ। यो संग्रहमा पूर्वदेखि पश्चिमसम्म विभिन्न स्थानबाट सञ्चालनमा आएका सामुदायिक रेडियोहरूले समुदायमा पारेका प्रभावहरूको घटनावली संकलित छन्।

यस संग्रहका लागि सामुदायिक हित, गैरनाफामुखी, स्वतन्त्र र नागरिक आधार भएका गैरसरकारी तथा सहकारी संस्थाद्वारा सञ्चालित रेडियोहरूलाई सामुदायिक रेडियो भनेर परिभाषित गरिएको छ। यस प्रकाशनमा सामुदायिक रेडियोहरूले विगतमा द्वन्द्व र शान्ति स्थापना, सामुदायिक विकास, जातिय भेदभावको अन्त्य, सुशासन, घरेलु हिंसा, व्यक्तिगत जीवनमा प्रभाव, स्वयम्सेवा, स्रोत व्यवस्थापनजस्ता उल्लेख्य घटनाहरूलाई दशवटा खण्डमा विभाजित गरी सफलताका ५४ वटा कथ्य प्रमाणहरू संग्रहित छन्।

यस प्रकाशनको मुल मर्म सामुदायिक रेडियोको सफल प्रयासलाई सार्वजनिक गर्नु तथा साथसाथै सामुदायिक रेडियोलाई वैधानिकता दिनु पर्ने आवश्यकतालाई सप्रमाण उद्घोष गर्नु हो । यो प्रकाशन नेपाली सामुदायिक रेडियो अभियन्ता तथा सञ्चालकहरूले प्रतिकुल कानुनी परिस्थितिका वावजुद पनि सामुदायिक रेडियोको अभियान थाल्ने निर्णय मुलकका लागि सही थियो भन्ने कुरा व्यावहारबाट सिद्ध गरेका प्रमाणहरूको संग्रह समेत हो ।

सफलताका कथ्य प्रमाणहरू पठाएर सहयोग गर्नु हुने अध्यक्ष तथा स्टेशन मेनेजरहरू कृष्ण नेपाल-रेडियो लुम्बिनी, शिवजी गायक-रेडियो जागरण, भक्त स्याङतान-रेडियो नमोवुद्ध, टंक थापा तथा भीम राई-रेडियो रुपाकोट, ज्ञानेन्द्र गौतम-वाग्लुङ एफएम, प्रेम निङलेखु-रेडियो म्यान्छ्येयम, दधिराम सुवेदी तथा विपुल पोखरेल-रेडियो स्वर्गद्वारी र जिबन्छ चौधरी-समाद एफएमप्रति हामी आभारी छौं ।

अन्त्यमा यस प्रकाशनमा समेटिएका सामुदायिक रेडियोको सफलतालाई अन्य रेडियोहरूले सिकाईका रुपमा लिउन र सान्दर्भिक भए आफ्नो क्षेत्रमा लागू गर्ने प्रयास गरुन भन्ने स्वाभाविक आशा पनि हामीले लिएका छौं । यसका साथै नीति निर्माता तथा अन्य सरोकारवालाहरूका लागि समेत उपयोगी सन्दर्भ सामग्री हुने कुरामा पनि हामी विश्वस्त छौं । यस पुस्तकलाई अद्योपान्त हरेर सुझाव दिनु हुने नगेन्द्र लम्साल र भाषा सम्पादन गरेर पुस्तकलाई पठनीय बनाइदिनु हुने पत्रकार राजेश घिमिरे धन्यवादका पात्र हुनुहुन्छ ।  यो पुस्तक प्रकाशनलाई सम्भव बनाउन सहयोग पुऱ्याउने ओपन स्वसाइटी फाउण्डेशनप्रति आभारी छौं । साथै यो सग्रह सम्पादनको अवसर प्रदान गरेकोमा सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूहप्रति हार्दिक कृतज्ञता व्यक्त गर्दछौं ।

**रघु मैनाली**
**भुपराज खड्का**

# शान्ति स्थापनाको अभ्यास

२०६४ साल भदौ ३० गते । घटना कपिलवस्तु जिल्लाको वीरपुर गाविस-६ का बासिन्दा तथा माओवादी प्रतिकार आन्दोलनका नेता र मुसलमान समुदायका अगुवा मोहित खाँको हत्या भयो । अज्ञात समूहको गोली प्रहारबाट खाँको हत्या लगत्तै उक्त क्षेत्रमा भड्किएको हिंसा साम्प्रदायिक रुप नै लियो । उक्त साम्प्रदायिक हिंसामा परी उक्त क्षेत्रका १३ जना सर्वसाधारणको बिना कारण ज्यान गयो । करिब एक साता सम्म चलेको हिंसाले कपिलवस्तु र आसपास क्षेत्रका ७ सय २९ घरपरिवार प्रत्यक्ष रूपमा प्रभावित भए । यस मध्ये अधिकांश परिवारका घर जलेर खरानी नै भए । यस हिंसाका क्रममा सडकमा गुडिरहेका २ सय १६ वटा सवारी साधनलाई पनि जलाइएको थियो ।

यो हिंसाका कारण सयौं परिवार उक्त स्थानबाट विस्थापित बनायो । आर्थिक रुपमा सम्पन्नहरू त विकल्प खोजेर अन्यत्र बसाइ सरे तर विकल्प खोज्न नसक्नेहरूका लागि खुल्ला चौरको बास भयो । अझैपनि तिमध्ये थोरैले मात्र आफ्नो बासको व्यवस्था गर्न सकेका छन् भने धेरै परिवार क्षतिपूर्तिको आशमा च्यातिएको पालमुनि बास बस्न वाध्य छन् ।

घटना पछि राज्यले पीडितहरूलाई राहत दिने घोषणा गरेको थियो । पीडितले पनि ठूलै आशा गरेका थिए । त्यतिबेला विभिन्न गैरसरकारी संस्थाहरू समेत आ-आफ्नो क्षेत्रबाट सहयोग जुटाउन लागि परेका थिए । ठूलै प्रचार-प्रसार समेत भयो, अनेकन पहल पनि भयो । तर त्यो पर्याप्त भने हुन सकेन । घटनाको जति प्रचार भयो त्यसअनुसार पीडितले राहत भने पाउन सकेनन् । यो घटनामा राज्य जति जिम्मेवार हुनुपर्थ्यो त्यसो हुन नसकेको सर्वत्र महसुस भयो । यही कुरा गैरसरकारी क्षेत्रको हकमा पनि लागू भयो ।

**पीडित भएका बालबालिकाप्रति कसैले ध्यान नदिएको देखेपछि उनीहरूलाई केही सहयोग पुऱ्याउनका लागि रेडियो व्यवस्थापन समिति र रेडियोकर्मीले पहल गरे ।**

हिंसात्मक त्यो घटनाका बारे समुदायलाई सूचित गर्ने आफ्नो प्राथमिक जिम्मेदारीको काम सामुदायिक रेडियो लुम्बिनी एफएमले गरिरहेकै थियो । त्यतिबेला सबैको ध्यान हिंसा पीडितलाई राहत पुऱ्याउनमात्र गएको थियो र दीर्घकालिन रुपमा सामाजिक सद्भाव कायम गर्नेतर्फ ध्यान जान सकिरहेको थिएन । त्यसमाथि घटनामा परी पीडित भएका बालबालिकाप्रति कसैले ध्यान नदिएको देखेपछि उनीहरूलाई केही सहयोग पुऱ्याउनका लागि रेडियो व्यवस्थापन समिति र रेडियोकर्मीले पहल गरे ।

रेडियो लुम्बिनीले बालबालिकाका लागि सहयोग जुटाउन २०६५ फागुनमा एक साँस्कृतिक कार्यक्रमको आयोजना गऱ्यो । उक्त सांस्कृतिक कार्यक्रमबाट २ लाख ५ हजार ७ सय रूपैयाँ सहयोग सङ्कलन भएको थियो । त्यसमा कार्यक्रम सञ्चालन खर्च कटाएर बचेको १ लाख ३६ हजार ४ सय ९८ रूपैयाँ दुई विद्यालयमा अध्ययन गरिरहेका हिंसापीडित बालबालिकालाई छात्रावृत्ति उपलब्ध गराउने निर्णय रेडियो लुम्बिनीको सञ्चालक समितिले गऱ्यो ।

शिवपुर गाविसको हल्लानगर गाउँ हिंसामा सबैभन्दा बढि प्रभावित ठाउँ हो । त्यतिबेलाको हिंसाका क्रममा गाउँका घरहरूमा आगो लगाइदिदा १ सय ५० घरसँगै बालशिक्षा प्राथमिक विद्यालय पनि पूर्णरुपमा ध्वस्त भएको थियो । रेडियो लुम्बिनीको पहलमा बालशिक्षा प्रावि हल्लानगरमा ८६ हजार ४ सय ९८ रकमको अक्षयकोष स्थापना भएको छ । बालबालिकाहरूलाई शिक्षा आर्जन गर्नका लागि थोरै भएपनि सहयोग पुगोस् भनेर स्थापित कोषबाट प्राप्त हुने ८ हजार ९ सय ४४ ब्याजबाट २७ जना हिंसा पीडित र असाहय बालबालिकालाई वितरण गर्न थालिएको छ । उक्त विद्यालयमा हाल ३ सय ५७ जना विद्यार्थी अध्ययनरत छन् ।

रेडियो लुम्बिनीले जगदिशपुरस्थित भुवनेश्वरी माविमा ५० हजार रूपैयाँको अक्षयकोष स्थापना गरेको छ । उक्त अक्षयकोषको रकमको ब्याजबाट वार्षिक रुपमा प्राप्त हुने ५ हजार १ सय ७० रूपैयाँबाट १३ जना विद्यार्थीलाई छात्रवृति वितरण भइरहेको छ । उक्त माविमा हाल ६ सय २३ विद्यार्थी अध्ययनरत छन् ।

रेडियो लुम्बिनीका अध्यक्ष र सम्बन्धित विद्यालयका प्रधानाध्यापकको संयुक्त हस्ताक्षरमा कोष संचालनको व्यवस्था मिलाइएको छ । अक्षय कोषको ब्याज रकम निकासा गरी विद्यालयको व्यवस्थापन समिति, प्रधानाध्यापक र रेडियो लुम्बिनीको प्रतिनिधिको रोहवरमा छात्रवृत्ति रकम वितरण गरिन्छ । रुपन्देही जिल्लामा रहेको रेडियो लुम्बिनीले छिमेकी जिल्ला र आफनो प्रसारण क्षेत्रका समुदायको हितमा गरेको गतिविधिले ४० जना हिंसा पीडित विद्यार्थीका लागि शिक्षा आर्जनमा सहयोगी बनेको छ रेडियो ।

# बन्द विद्यालय खुलाउन सफल

करिब एक वर्षदेखि बन्द विद्यालयका सम्बन्धमा कार्यक्रम उत्पादन गर्नका लागि रेडियोकर्मी पुग्दा अन्तत विद्यालय खोल्ने वातावरण निर्माण भएको छ ।

सञ्चालक समिति गठनको विवादमा बाग्लुङ जिल्लाको अमलाचौर गाविस-७ सम्माचौर स्थित श्रीकृष्ण प्राथमिक विद्यालय बन्द भएको थाहा पाएपछि बाग्लुङ एफएमले आफ्नो रेडियो कार्यक्रम "फराकिलो धर्ती" मा त्यससम्बन्धी विषयमा केन्द्रित भएर २०६६ साल फागुन २८ का लागि कार्यक्रम उत्पादन गर्ने निधो गरेको थियो । वास्तवमा, विद्यालय व्यवस्थापन समिति गठन गर्ने क्रममा राजनीतिक रुपमा एउटै पार्टीका मात्र मानिसको सहभागिता भएको र समावेशी ढङ्गको व्यवस्थापन समिति नबनाइएको लगायतका विषयलाई लिएर केही असन्तुष्ट अभिभावकहरूले विद्यालयमा ताला लगाए । असन्तुष्ट पक्षको उक्त तालाबन्दीका कारण करिब एक वर्ष सम्म विद्यालय बन्द भयो । एकपक्ष अभिभावकहरू विद्यालयमा तालाबन्दी गर्ने र अर्को पक्ष असन्तुष्ट पक्षलाई दोष देखाएर चुप लागेर बसेकाले करिब दुईसय जना विद्यार्थी पढ्नबाट बञ्चित भएका थिए ।

असन्तुष्ट मध्येकै केही अभिभावकहरूको समूहले नै बाग्लुङ एफएममा जानकारी दिएपछि एफएमले यस विषयमा कार्यक्रम उत्पादन गरी प्रसारण गर्ने निधो गरेको हो । रेडियोबाट कार्यक्रम उत्पादनका लागि

उषा पौडेल र गीता विश्वकर्मा लगायतका रेडियोकर्मीलाई बन्द रहेको उक्त विद्यालयमा नै पठायो ।

रेडियोकर्मीले विद्यालयमा तालावन्दीका कारण विद्यालयको वार्षिक परीक्षा नै अवरुद्ध हुन लागेको तथ्य पत्ता लगाए । विद्यालय शान्ति क्षेत्र हुनुपर्छ भन्ने आवाज उठेका बेलामा विद्यालयमा देखिएको यो समस्यालाई एफएमले निकै ठूलो ठान्यो । पठनपाठन अवरुद्ध हुँदा विद्यालयमा अध्ययन गर्ने करिब दुईसय जना विद्यार्थीको भविष्यमाथि नै खेलवाड भइरहेको थियो । समस्यालाई समाधान गरी विद्यालयलाई सञ्चालनको पहल गर्नुपर्ने सरोकारवाला निकाय जिल्ला शिक्षा कार्यालय र स्रोत केन्द्र जानकारी नपाएको जस्तो गरी बेवास्ता गरेको अनुभुति रेडियोकर्मीलाई भयो । यो विषयलाई जिल्ला शिक्षा कार्यालयमा लगेर समाधान गर्नेतर्फ विद्यालयका अभिभावकहरू चिन्तित भएको पाइएन । समस्यालाई नियमन निकायसम्म नलैजाने तर विद्यालयको पठनपाठन अबरुद्ध गर्नेमा दुबै पक्ष दोषी देखिए । विद्यालयमा देखिएको द्वन्द्व कसरी व्यवस्थापन गर्ने र विद्यालय खोल्नको लागि सहयोग पुग्ने गरी कार्यक्रम तयार गर्ने निष्कर्षमा एफएम पुग्यो । रेडियो कार्यक्रम “फराकिलो धर्ती” को पूरै समय यही मुद्दामा केन्द्रित गर्ने तयारी पनि गर्‍यो ।

**रेडियो कार्यक्रम प्रसारण भएको तीन दिनपछि नै विद्यालयमा सर्वपक्षिय अभिभावकहरूको भेला बोलाएर सर्वसम्मतिले नयाँ व्यवस्थापन समितिको चयन गर्‍यो र नियमित रूपमा विद्यालय सञ्चालनमा आयो ।**

कार्यक्रममा विद्यालयका प्रधानाध्यापक अप्सरा शर्मा, विद्यालय व्यवस्थापन समितिका अध्यक्ष घनश्याम विक, व्यवस्थापन समितिका अन्य सदस्यका साथै असन्तुष्ट पक्षका कमल विक, लिला विकलगायत अभिभावकहरू शारदा शर्मा, ज्योति विक सहित विभिन्न स्थानीय राजनीतिक दलका प्रतिनिधिसँग सामूहिक छलफलसँगै रेडियो कार्यक्रमका लागि कुराकानी पनि गर्‍यो । यसरी रेडियो कार्यक्रम उत्पादनको लागि सबै समूहसँग गरिएको कुराकानी बाग्लुङ एफएमबाट प्रसारण हुने जानकारी दिइयो । रेडियोबाट कार्यक्रम प्रसारण हुने जानकारी पाएपछि

कार्यक्रम उत्पादन कै क्रममा द्वन्द्वरत दुबै पक्षहरू गम्भीर भए। समस्या जिल्ला शिक्षा कार्यालयमा पुग्ने र दुबै पक्षलाई कारबाही हुने कुराले दुबै पक्ष डराए। करिब एकवर्ष सम्म विद्यालय बन्द भएको विषय शिक्षा कार्यालयलाई जानकारी नदिएकोमा प्रधानाध्यापक र अन्य शिक्षकहरू झन गम्भीर देखिए। शिक्षकहरूको सक्रियतामा उक्त रेडियो कार्यक्रम उत्पादनको लागि भेला भएका अभिभावक बीचमा नै एउटा सहमति भयो।

उक्त सहमतिमा विद्यालय व्यवस्थापन समितिले पुनः सर्वपक्षीय भेला बोलाउने भयो। भेलाबाट सर्वसम्मत नयाँ कार्य समिति गठन गर्न दुबै पक्ष सहमत भए। तालाबन्दीका कारण बन्द भएको विद्यालय तत्काल नै सञ्चालन गर्ने सहमति भयो। सहमति भएको विषयलाई एफएमले प्रसारण गर्‍यो। कार्यक्रम प्रसारण भएको तीन दिनपछि नै विद्यालयमा सर्वपक्षिय अभिभावकहरूको भेला बोलाएर सर्वसम्मतिले नयाँ व्यवस्थापन समितिको चयन गर्‍यो  र २०६६ चैत १ गतेबाट नियमित रुपमा विद्यालय सञ्चालनमा आएको छ। विद्यार्थीहरूले वार्षिक परीक्षा दिन नपाउने अवस्थाको अन्त्य भयो। उक्त विद्यालय नियमित रुपमा पठनपाठन भै हाल सञ्चालनमा रहेको छ।

“विभिन्न किचलो झिकी एक वर्षसम्म बन्द भएको विद्यालय बाग्लुङ एफएमले कार्यक्रम बनाएर रेडियोबाट सहजीकरण गर्दा तत्काल खोल्ने सहमति भयो,” अभिभावक शारदा शर्माले जानकारी दिनुभयो। बाग्लुङ एफएमले शान्ति निर्माण र द्वन्द्व व्यवस्थापनका विषयमा नियमित रुपमा रेडियो संवाद कार्यक्रम “फराकिलो धर्ती” दुई वर्षदेखि सञ्चालन गर्दै आएको छ।

# द्वन्द्व पीडितलाई मौका

दाङ जिल्लामा मात्र द्वन्द्व पीडितहरूको सङ्ख्या करिब ६ हजार रहेको सार्वजनिक भएको छ। दश वर्षे सशस्त्र द्वन्द्वमा को कसरी पीडित भयो भन्ने जानकारी राख्ने निकाय थिएन। नेपाल सरकार र

सशस्त्र युद्धरत पक्ष नेकपा माओवादी बीच बृहत् शान्ति सम्झौता भएपछि द्वन्द्वका असर र पीडाको बारेमा खोजी र लेखाजोखा हुन थाल्यो । उक्त सम्झौता अनुसार नै जिल्लामा शान्ति समिति निर्माण हुन थालेपछि यस्तो लेखाजोखा हुन थालेको हो । यो अभियान दाङ जिल्लामा पनि चल्यो ।

२०६६ मंसिर भित्र दाङमा क्रियाशील राजनीतिक दलहरू द्वन्द्व पीडितको राहतका लागि आवेदन नदिएकाहरूलाई पुनः आवेदन म्याद थप्न सहमत भए । यसरी थपिएको म्यादबारे सार्वजनिक जानकारी गराउने स्थानीय शान्ति समिति र दलहरूले आवश्यकता नै ठानेनन् । स्थानीय राजनीतिक दलहरूले आफ्ना कार्यकर्ताका लागि मात्र म्याद थप गरेको आरोप लाग्यो । रेडियोमा नै गुनासो आउन थाल्यो । त्यसपछि मात्र स्थानीय राजनीतिक दलको संयन्त्र र जिल्ला प्रशासन कार्यालय दाङले द्वन्द्व पीडितले फारम भर्ने म्याद थपिएको जानकारी रेडियोलाई दियो । उक्त जानकारी कै आधारमा रेडियोले आम सर्वसाधारणको हितका लागि सार्वजनिक सूचना निःशुल्क प्रसारण गर्ने टुङ्गोमा पुग्यो ।

सोही अनुसार रेडियो स्वर्गद्वारी एफएमले २०६६ साल मंसिर ८ गतेदेखि २३ गतेसम्म सम्म सार्वजनिक सूचना प्रसारण गऱ्यो । रेडियोबाट सूचना प्रसारण भएपछि दाङ जिल्लामा मात्र करिब ९ सय जनाले फारम भरे । राज्यबाट पाउने राहतका लागि फारम भर्ने बारेमा राजनीतिक दलहरूले सार्वजनिक सूचना जारी नगरेर पारदर्शिता नअपनाएको आरोप लागेको थियो । रेडियोले सूचना सार्वजनिक गरेपछि राजनीतिक दलले आफ्ना कार्यकर्तालाई मात्र फारम भर्न लगाएको गुनासोको अन्त्य मात्र भएन व्यक्तिगत सम्पर्कको अभावमा त्यस

**रेडियोले सूचना सार्वजनिक गरेपछि राजनीतिक दलले आफ्ना कार्यकर्तालाई मात्र फारम भर्न लगाएको गुनासोको अन्त्य मात्र भएन व्यक्तिगत सम्पर्कको अभावमा त्यस बारेमा जानकारी नपाएका दाङका द्वन्द्व पीडितहरूले फारम भर्ने मौका पनि पाए ।**

बारेमा जानकारी नपाएका दाङको गाउँ गाउँमा रहेका द्वन्द्व पीडितहरूले फारम भर्ने मौका पनि पाए ।

गाउँका कयौं द्वन्द्व पीडितहरू द्वन्द्वको त्रासका कारण पीडितहरू निवेदन दिन आउन नसकेकाले पुनः निवेदन दिने म्याद थप्नका लागि स्थानीय राजनीतिक दलहरूसमक्ष धेरै पटक माग गरेका थिए । सोही आधारमा जिल्ला प्रशासन कार्यालय र दलहरू सहमत त भए । तर निवेदन दिने म्याद थपबारे सूचना वास्तविक द्वन्द्व पीडित समक्ष पुऱ्याउने काममा भने कन्जुस्याई भएको थियो । यो कन्जुस्याई कै कारणबाट धेरै वास्तविक पीडित छुट्ने अवस्थाको सिर्जना भयो । तर रेडियो स्वर्गद्वारीबाट सार्वजनिक सूचना प्रसारण भएपछि सम्बन्धित पीडित सम्म जानकारी पुगेको दाङको हापुर गाविसका स्थानीय बासिन्दा सुभाष न्यौपानेले बताउनुभयो ।। उहाँले भन्नुभयो-'अझ थप पीडित भइन्छ की भन्ने त्रासका कारण दर्ता नभएका हापुर गाविसका ४५ जना द्वन्द्व पीडितलाई रेडियोबाट सूचना जारी भएपछि फारम भराउन लगायौं ।'

रेडियोले प्रसारण गरेको सूचनाका कारण नै करिब नौ सय द्वन्द्व पीडित सूचिकरण भएका छन् । द्वन्द्व कालमा दाङ जिल्लामा राज्य र बिद्रोही पक्षबाट थुप्रै मानिस प्रभावित हुन पुगे । द्वन्द्व पीडितहरूका नाममा टाठाबाठाहरूको मात्र पहुँच पुग्ने देखिएपछि रेडियाले निःशुल्क रुपमा यो अभियान सञ्चालन गरेको हो । यसरी रेडियोको सानो प्रयासबाट स्थानीय शान्ति समितिमा द्वन्द्वका घटना सूचिकृत हुने काममा भने ठूलै सहयोग पुगेको छ ।

# रेडियोको पहलमा दलबीच सहमति

सशस्त्र द्वन्द्वको असर र तुसलाई न्यूनीकरण गरी द्वन्द्व पीडितहरूलाई सहयोग पुऱ्याउन सरकारले सबै जिल्लामा शान्ति समिति गठन गऱ्यो । धेरै जिल्लामा शान्ति समिति बनेर क्रियाशिल भएको लामो समय वितिसकेको थियो । तर, काठमाडौँसँगै जोडिएको काभ्रेपलाञ्चोक जिल्लामा भने नेतृत्व कसले गर्ने भन्ने विषयमा सहमति जुटन सकेको

**"तर आज रेडियोले राखेको कार्यक्रममा दलहरू सहमत भएका छन् । अब शान्ति समिति सक्रिय हुने भयो ।"**

थिएन र त्यही विवादले शान्ति समिति नै गठन हुन सकेको थिएन ।

रेडियो नमोबुद्धले यो विषयलाई नियमित समाचार तयार गरी प्रसारण गर्न थाल्यो । करिब डेढ वर्ष सम्म यो क्रम निरन्तर चलिरहयो । तैपनि शान्ति समिति बन्न नसकेपछि यही विषयमा रेडियो नमोबुद्धले सार्वजनिक सुनवाई कार्यक्रम नै आयोजना गर्‍यो । २०६७ फागुन १६ गते धुलिखेलमा आयोजित सार्वजनिक सुनवाईमा 'सबैजसो जिल्लामा शान्ति समिति बनेर अनेकन गतिविधि सञ्चालन गरिरहेकोमा काभ्रेपलाञ्चोकमा किन गठन हुन सकेन ?', 'यसरी समिति बन्न नसक्नुको कारण के हो ?', 'किन सबै दललाई संयोजक पद नै चाहिएको हो ?' 'राजनीतिक दलले स्थानीय शान्ति समिति संयोजकको दावी छोड्न किन तयार भएनन् ?' जस्ता प्रश्नहरू उठाइएको थियो ।

उक्त कार्यक्रममा जिल्लामा क्रियाशील राजनीतिक दल र द्वन्द्वपिडित समुदायको सहभागिता रहेको थियो । कार्यक्रमलाई रेडियो नमोबुद्धले प्रत्यक्ष प्रसारण गरेको थियो । कार्यक्रमको सुरुमा सहभागी दलहरूका प्रतिनिधिलाई उनीहरूले शान्ति समितिको संयोजक पद नै पाउनुपर्ने विषयका बारेमा बोल्ने मौका दिइयो । उक्त समयमा सबै दलले आफूले नै संयोजक पाउनु पर्ने दलिल पेश गरे । दलहरूले आफ्नो दलिल पेस गरेपछि सहभागीहरूलाई दलहरूको दाबीमाथि विचार राख्ने मौका दिइएको थियो । र, दलका प्रतिनिधि बाहेकका सहभागीले सार्वजनिक रुपमा यो विवाद नगर्न र तत्काल सहमति गर्न दबाब दिए । त्यति मात्र होइन, दलहरूबाट आलोपालो शान्ति समितिको संयोजक बनेर शान्ति समिति सक्रिय बनाउन दलहरूलाई सहभागीले प्रस्ताव नै गरे । यो प्रस्तावलाई आधार बनाई अन्त्यमा रेडियो नमोबुद्धलेबाट स्थानीय शान्ति समितिको दाबी गरिरहेका एकीकृत माओवादी, नेपाली काँग्रेस र नेकपा (एमाले)लाई क्रमशः संयोजक बन्न र शान्ति समिति सक्रिय बनाउन औपचारिक रुपमा नै आग्रह गर्‍यो । यो आग्रहलाई तीन दलका प्रतिनिधिले सहमति जनाए । अन्य सहभागीले समेत तत्कालै सहमति जनाए । यो विषयमा रेडियोले

कार्यक्रम आयोजना गरी प्रत्यक्ष प्रसारण गरेपछि सहमति जनाउन दलहरूलाई दबाब नै सिर्जना गऱ्यो ।

उक्त कार्यक्रममा नै दलहरू सहमत भएको घोषणा गर्न बाध्य भए । सोही कार्यक्रममा पहिलो छ महिना एकीकृत माओवादीको प्रतिनिधि स्थानीय शान्ति समतिको संयोजक बन्ने र दोस्रो छ महिनाको लागि एमालेका प्रतिनिधि र तेस्रो ६ महिनाको लागि नेपाली काँग्रसको प्रतिनिधिले संयोजक बन्ने टुङ्गो लाग्यो ।

यसरी स्थानीय शान्ति समितिका सचिवले दर्जनौ पटक दलहरूको बीचमा बैठक राख्दा पनि प्रायः असम्भव जस्तै भएको संयोजक विवाद रेडियो नमोवुद्धले सार्वजनिक सुनवाई कार्यक्रमको आयोजना गरेपछि सम्भव भयो । तत्कालीन शान्ति समितिका सचिव अधिक बडालका अनुसार दर्जनौ पटक दलहरूको माझ बैठक राख्दा महिनौसम्म कुनै पनि दलले संयोजक छोड्न तयार नै भएका थिएनन् । बडालले भन्नुभयो- 'तर आज रेडियोले राखेको कार्यक्रममा दलहरू सहमत भएका छन् । अब शान्ति समिति सक्रिय हुने भयो ।'

यसरी संयोजक विवाद टुङिएपछि बसेको स्थानीय शान्ति समितिको पहिलो बैठकले रेडियो नमोबुद्धलाई धन्यवाद दिने प्रस्ताव समेत पास गऱ्यो । र, उक्त बैठकले शान्ति समिति र रेडियो नमोबुद्धको सहकार्यमा तीन महिनासम्म रेडियो कार्यक्रम सञ्चालन गर्ने समेत निर्णय गऱ्यो ।

# ठूलो भिडन्त रोकियो

२०६५/६६ को मधेश आन्दोलनपछि एक्कासी सिरहाको लाहान र आसपासका क्षेत्रमा मधेशी र थारू समुदाय बीचमा बीचमा द्वन्द्व बढ्यो । मधेशी र थारू समुदायमा भएको साम्प्रदायिक द्वन्द्वको शान्तिपूर्ण समाधानका लागि दुवै पक्षका प्रतिनिधिलाई समाद एफएमले एकै ठाउँमा ल्याई द्वन्द्व न्यूनीकरण गर्ने काम गऱ्यो ।

भर्खर नै मधेश आन्दोलनको कार्यक्रम सकिएको अवस्थामा २०६५ साल जेठ १८ गतेका दिन लाहानमा मधेशी समुदाय र थारु समुदाय

बीच एक्कासी ठूलै भिडन्त भयो । भिडन्त न्यूनीकरणको लागि खासै पहल कतैबाट भइरहेको थिएन । यसबाट द्वन्द्व झन चर्कने अवस्थामा थियो । जुन समुदायको जहाँ बाहुल्यता थियो त्यहाँ अर्को समुदाय माथि आक्रमण हुने तनावको स्थिति थियो । द्वन्द्वरत दुवै पक्ष बीच समस्याको शान्तिपूर्ण समाधानका लागि संवाद हुन सकिरहेको थिएन । स्थानीय प्रशासन केवल मूकदर्शक बनिरहेको थियो । उक्त समस्या सिराहाको लाहानबाट ग्रामीण बस्तीतर्फ एक अर्को समुदायप्रति द्वेशको भावना सहित सर्दै थियो र साम्प्रादायिक हिंसा भडकिने खतरा थियो । स्थानीय समाजका अगुवा र मानवअधिकारकर्मीका साथमा समाद एफएमले समस्या समाधानका लागि संवादको थालनीसँगै समुदायमा सामाजिक सद्भाव कायम गर्नको लागि आव्हान गर्ने प्रस्ताव स्थानीय प्रशासन समक्ष राखिएको थियो । स्थानीय प्रशासनले पनि उक्त प्रस्तावलाई स्वीकार गऱ्यो । यो सहमति कार्यान्वयनको लागि द्वन्द्वरत पक्षलाई संवाद स्थल सम्म ल्याउन समाद एफएमका स्टेशन व्यवस्थापक जिवछ चौधरी, पूर्व अध्यक्ष शम्भुलाल चौधरी र रेडियो कार्यक्रम सञ्चालक राधेश्याम रामलाई अनौपचारिक जिम्मा दिइयो ।

एक घरबाट अर्को घरसम्म र एक टोलबाट अर्को टोलसम्म जान गाह्रो भइरहेको समयमा तीन रेडियोकर्मीको पहलमा रेडियो संवादको वातावरण सिर्जना भयो । सोही सहमति अनुसार रेडियोले २०६५ साल जेठ १९ गते समाद एफएमको स्टुडियोमा चारवटा पक्षलाई ल्याएर संवाद गऱ्यो । उक्त रेडियो संवादमा स्थानीय प्रहरी प्रशासनको तर्फबाट प्रहरी निरिक्षक श्यामल सुब्बा, मानवअधिकारवादी शिवनरायण सिंह (दनुवार), थारु सामुदायको तर्फबाट अचमितलाल चौधरी र मधेशीको तर्फबाट सभासद्

**रेडियो संवाद सुरू हुनुभन्दा केही समय अगाडि रेडियोमा भएको बैठकमा सबैले घटनाका दोषीलाई छानबिन गरेर कारबाही गर्ने, तत्काल सबै पक्षले सो कार्यमा सहयोग गर्ने र एकअर्कालाई सम्मान गर्ने विषयमा रेडियो मार्फत आव्हान गर्ने सहमति भयो ।**

**"रेडियो संवादका कारण बलको प्रयोग बिना नै समस्याको शान्तिपूर्ण समाधान भयो र ठूलो धनराशीको क्षति हुन पाएन ।"**

राजलाल यादवलाई सहभागी गरायो । समाद एफएमले संवाद हुनु करिब दुईघण्टा अगाडि देखि द्वन्द्वरत पक्ष बीच प्रत्यक्ष रेडियो संवाद हुन लागेको सार्वजनिक सूचना प्रसारण गरिरहयो । सार्वजनिक सूचना मार्फत रेडियो संवाद सुन्नको लागि आग्रह गऱ्यो । घरघरमा घरेलु हतियार लिएर सम्भावित आक्रमणको प्रतिरोधको तयारी हालतमा रहेका दुवै पक्षको ध्यान खिच्न रेडियो सफल भयो । रेडियो संवाद सुरु हुनुभन्दा केही समय अगाडि रेडियोको बैठक कक्षमा भएको बैठकमा सबैले घटनाका दोषीलाई छानबिन गरेर कारबाही गर्ने, तत्काल सबै पक्षले सो कार्यमा सहयोग गर्ने र एकअर्कालाई सम्मान गर्ने विषयमा रेडियो मार्फत आव्हान गर्ने सहमति भयो । भित्रभित्र नै कुन बेला कुन पक्षले आक्रमण गर्ने हो, घाइते वा मृत्यु हुने हो की भन्ने त्रासमा बसेका लाहान र आसपासका समुदायको ध्यान तुरुन्तै रेडियोले तान्न सफल भयो । सबै टोल र घरघरमा मानिसहरू रेडियो संवाद सुन्न थाले ।

कुनै पनि पक्षबाट सार्थक पहल नभएकोमा रेडियो संवादले सामाजिक सद्भाव कायम गर्नका लागि संवादको थालनी गरेको हो । संवाद कार्यक्रमका सहभागी सबैले स्थानीय समुदायलाई सामाजिक सद्भाव कायम राख्न आग्रह गरे । उनीहरू अनावश्यक विवादले साम्प्रदायिक रुप लिएकोमा चिन्तित हुँदै यसलाई रोक्न सहमत भए । यसरी रेडियोबाट सबै समुदायका अगुवा र प्रहरी प्रशासनलगायत सबैले सामाजिक सद्भाव कायम गर्ने मात्र होइन सामाजिक सद्भाव खलबलाउन खोज्नेलाई छानबिन गरी कारबाहीको दायरामा ल्याउने विषयमा सहमत भए । उनीहरूले रेडियोबाट सबैलाई सामान्य जीवनमा फर्कनका लागि आव्हान नै गरे । यसरी रेडियोबाट भएको प्रत्यक्ष प्रसारण कार्यक्रममा सहभागीलाई विभिन्न व्यक्तिहरूले फोन मार्फत प्रश्न समेत सोधेका थिए ।

श्रोताको प्रश्नको जवाफ दिंदै प्रहरी निरीक्षक श्यामल सुब्बाले

समुदायका सदस्यलाई सबै सूचना सङ्कलन गरेर राख्न र त्यस्ता दोषीलाई प्रहरीले छानबिन सुरु गरेकाले कारबाहीको दायरामा ल्याउने जानकारी दिनुभयो ।

यसरी तीन दिनदेखि तनावमा रहेको समाजमा रेडियो संवादका कारण विस्तारै सद्भाव फर्किन थाल्यो । दैनिक जीवन सामान्य हुन थाल्यो । समुदायका अगुवाको भनाईलाई स्थानीय मानिसहरूले आत्मसात् गरेको देखियो । प्रहरी निरिक्षक श्यामल सुब्बाका अनुसार अन्य जिल्ला र क्षेत्रीय प्रहरी कार्यालयबाट थप सुरक्षाकर्मी मगाएर द्वन्द्व रोक्ने तयारी गरिरहेको समयमा रेडियोले गरेको संवादले थप हिंसा रोक्न मद्दत गरेको बताउनुभयो । उहाँले भन्नुभयो - 'रेडियो संवादका कारण बलको प्रयोग बिना नै समस्याको शान्तिपूर्ण समाधान भयो र ठूलो धनराशीको क्षति हुन पाएन ।'

# कब्जा बस नियन्त्रण मुक्त

२०६६ साल बैशाखमा तत्कालिन नेकपा माओवादी काभ्रेपलाञ्चोकले उक्त क्षेत्रमा अरनिको यातायत समितिले सञ्चालनमा ल्याएको २७ वटा बसहरू एक्कासी कब्जामा लियो । यातायात व्यवसायीले सामान्य लेनदेनको विषयलाई आधार बनाई यात्रुलाई दुःख दिएको र अरनिको यातायातले बढि भाडा लिएको विषय उठाएर माओवादीका स्थानीय कार्यकर्ताले बस नियन्त्रणमा लिएका थिए ।

यसरी यात्रुवाहक बसहरू नियन्त्रणमा लिंदा स्थानीय प्रशासन केवल मूकदर्शक मात्र बन्यो । बस व्यवसायीहरूले स्थानीय प्रशासनको कार्यालयमा उजुरी गरे । अन्य उपायको खोजी गरे । केही नलागेपछि व्यवसायीहरू माओवादीसँग संवाद गरिदिन स्थानीय सञ्चारकर्मी र मानवअधिकारकर्मीलाई गुहार्न थाले । स्थानीय प्रशासन भने तैं चुप मै चुपको अवस्थामा रहयो ।

यो विषयमा रेडियो नमोबुद्धले रेडियो संवाद कार्यक्रम आयोजना गर्ने निधो गर्‍यो । उक्त रेडियो संवादमा नेकपा माओवादी काभ्रेका जिल्ला सेक्रेटरी बमध्वज लामा र अरनिको यातायात समितिकाबाट

केदार क्षेत्रीको सहभागिता रहयो । अन्ततः उक्त रेडियो संवादका कारण नै माओवादी कब्जामा रहेका अरनिको यातायातका २७ वटाबाट बसहरू भोलीपल्ट नै कब्जा मुक्त भए ।

यातायात व्यवसायीले सामान्य भाडा विवाद र धेरै यात्रु चढाएको विषयलाई छलफल गरी समस्या समाधान गर्न सकिन्थ्यो । तर , माओवादीका स्थानीय कार्यकर्ताले बस नियन्त्रणमा लिएर झन यात्रुलाई कष्ट दिने काम गरेको बताउँदै अरनिको यातायात समितिका केदार क्षत्रीले नियन्त्रणमा लिएका बसहरू मुक्त गरिदिनका लागि आग्रह गुर्नभयो । उहाँले अन्य विषयमा अरनिको यातायात समिति वार्तामा बसी टुङ्गो लगाउन तयार भएको जानकारी दिनुभयो ।

माओवादी जिल्ला सेक्रेटरी लामाले सरकारले तोके बमोजिमको भाडा लागू हुनु पर्ने, बसको क्षमताभन्दा बढि यात्रु चढाउन नपाइने र बस चल्ने समय तालिका बारेमा जानकारी गराउन सार्वजनिक प्रतिबद्धता जनाए नियन्त्रणमा रहेका बसहरू तत्काल मुक्त गरिने बताउनुभयो । यसरी माओवादी र यातायता व्यवसायी बीच सामान्य संवाद सम्म हुन नसकिरहेको समयमा रेडियो कार्यक्रममा भएको संवाद मार्फत दुबै पक्षको धारणा सार्वजनिक गर्ने काम भयो । संवाद कार्यक्रमलाई रेडियोले प्रत्यक्ष प्रसारण समेत गऱ्यो ।

संवाद कार्यक्रमको भोली पल्ट नै यातायात व्यवसायीको तर्फबाट अरनिको यातायात समितिले एक प्रेस विज्ञप्ती प्रकाशित गरेर नेकपा माओवादीले उठाएको भाडादर र क्षमता अनुसारको यात्रु चढाउने विषयमा समिति सकारात्मक रहेको र ती विषयमा खुल्ला छलफल गर्न तयार रहेको सार्वजनिक प्रतिबद्धता जनायो । सोही दिन माओवादीले नियन्त्रणमा लिएका बसमाथिको नियन्त्रण छोडिदिए ।

**नेकपा माओवादीका काभ्रेबाट जिल्ला सेक्रेटरी बमध्वज लामा र अरनिको यातायात समितिकाबाट केदार क्षेत्रीको सहभागिता भएको रेडियो संवादका कारण नै माओवादी कब्जामा रहेका अरनिको यातायातका २७ वटाबाट बसहरू भोलिपल्ट नै कब्जा मुक्त भए ।**

रेडियो नमोबुद्धले समस्या

समाधानका लागि दुवै पक्षलाई रेडियोमा वोलाएर संवादको थालनी गरेपछि यातायात व्यवसायीहरूले पनि रेडियो सुनेर माओवादीले बस नियन्त्रणमा लिनुको कारणबारे स्पष्ट जानकारी पाएका थिए । रेडियो सुनेर यातायात व्यवसायीहरू भेला भई सल्लाह गरेर माग सम्बोधन गर्ने प्रतिबद्धता जनाएपछि बस नियन्त्रण मुक्त भए ।

# रेडियोको पहलमा अपहरण मुक्त

२०६६ साल चैत ३१ गते सिरहाको घटना हो यो । लाहान नगरपालिका वडा नं ८ मा रहेको वाणिज्य बैंक छेउमा सामान्य होटल व्यवसाय गर्ने गरिब दासको छोरा मनु भनिने सुभाष दासको अज्ञात समूहले अपहरण गरेको हल्ला लाहान बजारभरि चल्यो । सबैतिर २०६६ साललाई विदा गरी नयाँ वर्ष २०६७ लाई स्वागत गर्ने तयारी भइरहेको बेलामा गरिब दासको घरमा छोरा अपहरणको खबरले रुवाबासी चलिरेहको थियो ।

यसरी बालकको अपहरण भएको केही समयमा नै अपहरणको समाचार समाद एफएमले प्रसारण गऱ्यो । त्यति मात्र होइन स्थानीय मानव अधिकारकर्मीले बजारबाट एक साधारण व्यापारीको बालक छोरा अपहरणमा परेको र सुकुशल रिहा गरिदिनको लागि आव्हान गरेका अनुरोधलाई रेडियोले प्राथामिकताका साथ प्रसारण गरिरहयो । सोही दिन सामुदायिक रेडियो समाद एफएमले समसामयिक विषयमा छलफलसँगै शुभकामना आदान प्रदान कार्यक्रम गर्दै २०६७ सालको स्वागत गर्ने कार्यक्रम तय गरेको थियो । कार्यक्रममा नागरिक समाज, स्थानीय राजनीतिक दलका प्रतिनिधि, विभिन्न सङ्घ संस्थाका प्रतिनिधि र सञ्चारकर्मीहरूको बाक्लो उपस्थिति रहेको थियो ।

तर नयाँ वर्षका स्वागतको लागि बसेका सबै सहभागीलाई खल्लो पाऱ्यो गरिब दासको घरको रुवाबासीले । कार्यक्रममा सहभागी समग्र विकास केन्द्रका अध्यक्ष तथा मानवअधिकारकर्मी दुर्गा महतो, बुद्धिजीवी धरणीधर अधिकारी, मानवअधिकार केन्द्रका अध्यक्ष शिवनारायण सिंह

लगायतका मानव अधिकारकर्मीले आजको रातभरमा अपहरित बालकलाई छोडिदिन अपहरणकारीलाई रेडियोबाट नै आग्रह गरे । २०६६ सालको आज अन्तिम दिन, भोलि नयाँ वर्षको खुशियाली मनाउन गरिब दासको परिवारले पनि पाउनुपर्ने धारणा रेडियोको प्रसारणमा सहभागीले राख्न थाले । २०६७ बैशाख १ गते बिहान जसरी पनि बालक मनु अपहरण मुक्त गरिदिनु भनी कार्यक्रमका सबै सहभागीले राखेको भनाई सामुदायिक रेडियो समाद एफएमले प्रत्यक्ष प्रसारण गरिरहयो ।

सोही रेडियो कार्यक्रममा आएर अपहरितका बुबा गरिब दासले आफू चिया पसल गरेर परिवारको जीविकोपार्जन गर्ने सामान्य मान्छे भएकोले आफूसँग दिने केही पनि नभएकोले छोरालाई अपहरण मुक्त गरिदिन अनुरोध गरे । उता बालक अपहरण गरेपछि ठूलै धनराशी हात पार्ने योजना बनाएको आपराधिक समूहले गरिब दासलाई सम्पर्क सम्म पनि गरेको थिएन । रेडियोबाट धेरै पटक प्रशारित सूचना र अनुरोध सुनेपछि उक्त आपराधिक समूहले रेडियोमा नै सम्पर्क गऱ्यो ।

आपराधिक समूहले २०६६ चैत ३१ गते रातीको ११ बजे रेडियोमा फोनगरी बालकलाई आफूले मुक्त गर्न लागेकोले अमुक स्थानमा उसको बुबालाई मात्र पठाउन आग्रह गऱ्यो । र, सोही अनुसार रेडियोले गरिब दासलाई खबर गरेपछि उक्त स्थानमा जाँदा आफ्नो छोरालाई भेटेर ल्याएको गरिब दासले बताउनु भयो । गरिब दासले छोरा भेटेपछि भन्नुभयो, 'रेडियो नभएको भए हाम्रो भनाई अपराधीसम्म पुऱ्याउन सकिने थिएन । संयोगले रेडियोले आयोजना गरेका कार्यक्रममा

**"रेडियो नभएको भए हाम्रो भनाई अपराधीसम्म पुऱ्याउन सकिने थिएन । संयोगले रेडियोले आयोजना गरेका कार्यक्रममा शुभकामना साटासाट गर्न आएका करिब एक सय मान्छेले नै मनुलाई आजै रिहा गर्नुपर्छ भन्ने भनाई अपराधीले सुने जस्तो लाग्छ । र, बिना सर्त र फिरौती नै छोरो लिएर आउन पाए ।"**

शुभकामना साटासाट गर्न आएका करिब एक सय मान्छेले नै मनुलाई आजै रिहा गर्नुपर्छ भन्ने भनाई अपराधीले सुने जस्तो लाग्छ । र, बिना सर्त र फिरौती नै छोरो लिएर आउन पाए ।'

त्यस्तै २०६४ साल भदौ ९ गते सिरहाको वस्तीपुर गाविसका गाविस सचिव मनोज कार्कीको अज्ञात समूहले अपहरण गरेको खवर आयो । सचिव कार्कीलाई राती घरमै सुतिरहेको अवस्थामा आठ दश जनाको समूहमा आएका अज्ञात हतियारधारी समूहले अपहरण गरेको हल्ला चल्न थाल्यो अपहरण पैसाको लागि भएको हुन सक्ने वडा प्रहरी कार्यालय लहानको भनाई उद्धृत गर्दै समाद एफएमले समाचार प्रसारण गऱ्यो । यता कार्कीको सकुशल रिहाईको लागि पहल गरिदिनका लागि परिवारजनले मानव अधिकारकर्मी, नागरिक समाज र स्थानीय प्रशासनसँग आग्रह गरेको विषयलाई पनि रेडियोले प्राथामिकताका साथ प्रसारण गऱ्यो । २०६४ साल भाद्र १० देखि १५ गते सम्म मानवअधिकारकर्मी र परिवारजनको सकुशल रिहा गरिदिन गरेको अपिललाई समाद एफएमले समाचार र अन्य कुनै न कुनै रुपम प्रसारण गरी नै रहयो । मानवअधिकारकर्मीले कार्कीको सकुशल रिहाई र ज्यान सुरक्षा लागि जिल्ला भरि नै अभियान र गतिविधि नै चलायो । यसलाई रेडियोले प्राथमिकताका साथ प्रसारण गरिरहयो । मानवअधिकारकर्मीले अपहरण गर्नु मानवता विरोधी अपराध भएकाले यथासिघ्र अपहरण मुक्त गर्न आग्रह गरेका थिए । अपहरित कार्कीका घरपरिवारका आमा, बुबा र श्रीमतीले आफ्नै आवाजमा रेडियोमा आएर अपहरणकारीसँग अपहरण मुक्त गरिदिन गरेको अनुरोध रेडियोले प्रसारण गऱ्यो ।

**अपहरित कार्कीका घरपरिवारका आमा, बुबा र श्रीमतीले आफ्नै आवाजमा रेडियोमा आएर अपहरणकारीसँग अपहरण मुक्त गरिदिन गरेको अनुरोध रेडियोले प्रसारण गऱ्यो ।**

२०६४ साल भाद्र १६ गते स्थानीय मानवअधिकारकर्मी शिवनारायण सिंह र एफएम संचालक समितिका सदस्य तथा मानवअधिकारकर्मी राजकुमार राउतलाई

अपहरणकारीले सकुशल रिहा गर्न लागेको जानकारी दिए। अपहरणकारीले मानवअधिकारकर्मी दुवै जनालाई स्थानीय तेरगनाको गोविन्दपुरको जंगलमा आएर लैजान भने। उनीहरूले मानवअधिकारकर्मीको जिम्मा लगाई कार्कीलाई एकहप्तापछि अपहरण मुक्त गरे। हाल कार्की सिराहाको वस्तीपुर गाविसमा कार्यरत हुनुहुन्छ। कार्कीका अनुसार अपराधीले रेडियो मात्र सुन्ने गरेको र सुरुमा यातना दिए पनि पछि मुक्त गर्दा खासै नराम्रो व्यवहार नगरेको बताउनुभयो। उहाँले भन्नुभयो- 'आफन्तजन र सबैको सन्देश उनीहरूसम्म पुऱ्याउने काम रेडियोले मात्र गऱ्यो। अर्को माध्यम नै थिएन।'

# पाइप जोडने रेडियो संवाद

धुलिखेल नगरपालिकाको केही वडामा लगेको खानेपानीको पाइप स्थानीय बासिन्दाले काटि दिएपछि उत्पन्न विवादले निकै ठूलो रुप लियो। पाइप काटेको विषयलाई लिएर स्थानीय उपभोक्ता र पाइप काट्ने वडाका बासिन्दाबीच ठूलो विवाद उत्पन्न भयो। उक्त विवादले झडप कै रुप लियो। दुवै पक्ष बीच सामान्य संवाद पनि हुन सकेन। पाइप काटिएपछि पानी उपयोग गरिरहेका वडामा भने पानीको हाहाकार नै मच्चियो। यो समस्यामा दुवै पक्षको बीचमा विवाद बढि नै रहयो। स्थानीय प्रशासन मूकदर्शक बनिरहयो। एक पक्षको कुरा अर्को पक्ष सम्म पुग्न सकिरहेको थिएन। पाइप काट्ने पक्ष कुनै पनि हालतमा पाइप जोड्न नदिने अडानमा थिए। पानी लैजाने पक्ष पाइप जोड्ने अडानमा थिए। यस्तो अवस्थामा दुवै पक्ष एक ठाउँमा बसेर विवादको समाधान गर्न समेत तयार थिएनन्। दुवै पक्षका अगुवालाई टेलिफोन मार्फत नै रेडियो संवादमा ल्याउने काम रेडियो नमोबुद्धले गऱ्यो। रेडियो संवादले विवादको समाधानसँगै दुई पक्षबीच हुन सक्ने सम्भावित भिडन्तलाई रोक्ने काम समेत गऱ्यो।

यो विवाद २०६५ चैत महिनाको हो, धुलिखेल नगरपालिका वडा

नं २ र ३ का बासिन्दाले वडा नं ८ र ९ मा लगिएको खानेपानीको पाइप काटिदिएका थिए । पाइप काट्नुको खासै कारण नभए पनि पाइप काटियो । उक्त पाइप काटिएपछि सोही खानेपानी आयोजनामा निर्भर रहेका उपभोक्तहरूका लागि पानीको हाहाकार नै मच्चियो । वडा नं ८ र ९ का वडाबासीहरू पाइप काटिएको ठाँउ खोज्दै हिंड्न थाले । यसरी पाइप काटिएको ठाउँसम्म पुगेर जोड्ने क्रममा काट्ने र जोड्ने समूह बीच विवाद बढ्न थाल्यो । विवादले ठाउँठाउँमा झडप नै भयो । सुरुमा केही मानिसले सिचाईको लागि लिन थालेको खानेपानीको पाइप काटिएको विषय पछि वडा-वडाको बासिन्दा बीच झगडाको विषय बन्यो । व्यक्तिहरूको झगडा सामूहिक झडपमा परिणत भएको समाचार रेडियो नमोबुद्धले प्रसारण गरिरहयो । यो विवाद समाधानको लागि ठोस पहल कतैबाट हुन सकेको थिएन । उता धुलिखेल खानेपानी उपभोक्ता समिति निरिह बनिरहेको थियो । दुवै पक्ष बीच सडकमा झडपको स्थिति थियो ।

**"सबै प्रतिकारको लागि तयार भएर बसेको समयमा रेडियो संवाद मार्फत वडा नं २ र ३ का समुदायका मानिसलाई धेरै कुरा बुझाउन सकिएका कारण तत्काल खानेपानीको पाइप जोडन सम्भव भएको हो ।"**

यस्तो अवस्थालाई सामान्य दैनिक समाचार सङ्कलन र प्रसारण मात्र सीमित नरहेर द्वन्द्वरत पक्ष बीचमा संवाद आवश्यक भएको ठहर गरी रेडियो संवादको लागि दुवै पक्षलाई रेडियो नमोबुद्धले एक ठाउँमा ल्याउने काम गऱ्यो । यसरी तय गरिएको प्रत्यक्ष रेडियो कार्यक्रममा धुलिखेल खानेपानी उपभोक्ता समितिका अध्यक्ष दयाराम गोयल र सङ्घर्षरत पक्षका पृथ्वी थापालाई स्टुडियोमा बोलाएर रेडियोले संवादको थालनी गऱ्यो । रेडियो नमोबुद्धले संवादको प्रत्यक्ष प्रसारण गऱ्यो । सडकमा बसेर झडपको लागि तयार भएका समुदायले सडकमा नै बसेर उक्त संवादलाई सुने । सोही कार्यक्रममा सङ्घर्षरत पक्षले खानेपानीको पाइप काट्ने काम गल्ती भएको स्वीकार गऱ्यो । र, अन्य समस्याको बारेमा पछि छलफल गरि समस्या

समाधान गर्ने टुङ्गो लाग्यो । खानेपानी पाइप जोड्ने कार्यमा अवरोध सिर्जना नगर्ने सहमति भयो । सोही अनुसार उपभोक्ता र समितिको सक्रियतामा खानेपानी पाइप जोड्ने काम भयो । सानो विषय, तर द्वन्द्वरत पक्षको बीचमा संवादको अभावमा हुन लागेको सम्भावित ठूलो झडप रोक्ने कार्य रेडियो संवादले गऱ्यो ।

घटना भएको तीन दिन सम्म स्थानीय प्रशासन लगायत कसैले ध्यान नदिएको विषयमा रेडियोले संवाद चलाएर विवाद समाधान गर्न रेडियोले ठूलो भूमिका खेलेको धुलिखेल खोनपानी उपभोक्ता समितिका अध्यक्ष दयाराम गोयल बताउनु हुन्छ । उहाँले भन्नुभयो, 'सबै प्रतिकारको लागि तयार भएर बसेको समयमा रेडियो संवाद मार्फत वडा नं २ र ३ का समुदायका मानिसलाई धेरै कुरा बुझाउन सकिएका कारण तत्काल खानेपानीको पाइप जोडन सम्भव भएको हो ।'

# कृषिजन्य सामाग्री बजारमा

तत्कालीन प्रधानमन्त्री माधवकुमार नेपालको नेतृत्वको सरकारको बर्खास्ती र संविधानसभाको ठूलो दलको हैसियतले नेकपा माओवादीको नेतृत्वमा राष्ट्रिय सहमतिको सरकारको माग गर्दै एकीकृत नेकपा माओवादीले अनिश्चितकालिन आम हड्तालको आयोजना गऱ्यो । अन्य क्षेत्र जस्तै किसान पनि हडतालको मारमा परे । किसानले उत्पादन गरेको दुध, तरकारी तथा फलफूल समयमा नै बजारमा लैजान पाएनन् । उनीहरूले सामूहिक रुपमा भित्रभित्रै विरोध गरेपनि आक्रोश सार्वजनिक रुपमा व्यक्त गरेका थिएनन । तर सडकमा आफ्नो आक्रोश पोख्न वा प्रतिरोधमा उत्रन सक्ने उकुस-मुकुसको वातावरण सिर्जना भइरहेको थियो । तत्कालिन सरकार र आन्दोलनरत माओवादी दुवै पक्ष यो समस्यामा संवेदनशील देखिएनन । किसानहरू उत्पादित कृषिजन्य उत्पादनहरू खोलामा फाल्न बाध्य भए । यो सम्भावित नयाँ खालको द्वन्द्वलाई न्यूनीकरण गर्न किसानहरूले उत्पादन गरेका सामग्रीलाई बजारसम्म सहज ढंगले पुऱ्याउने विषयमा रेडियो नमोबुद्धले

रेडियो संवाद कार्यक्रम चलाउने निधो गऱ्यो । रेडियो नमोबुद्धले काभ्रेमा आमहड्तालको नेतृत्व गरिरहेका पक्ष र तरकारी, फलफूल तथा दुग्ध व्यवसाय गरिरहेका किसानहरू बीच रेडियो संवाद गर्ने तय भयो । सोही अनुसार काभ्रेको कुन्ताबेसीका दिपक पौडेल, ढुङखर्कका किसान निर्जल शर्मा र पाल्ते खेतका श्रीहरि बरालले आ-आफना क्षेत्रका किसानले भोग्नु परेको घाटा र नोक्सानीको बारेमा विचार राख्नु भयो । उहाँहरूले तत्काल किसानले उत्पादन गरेका कृषिजन्य उत्पादनलाई बजारसम्म पुऱ्याउन नदिए उत्पादित सामग्री सहित आन्दोलनको प्रतिरोधमा उत्रने चेतावनी समेत दिनुभयो । उहाँहरूले किसानहरूले भोलिपल्ट देखिनै आफूले उत्पादन गरेको सामग्री बजारमा लैजाने तयारी गरेकोले राज्यले सुरक्षा दिनुपर्ने माग समेत गर्नुभयो ।

किसानहरूले यसरी दिएको चुनौती र मागलाई रेडियो नमोबुद्धले २०६६ चैत १८ गते प्राथमिकता साथ प्रसारण गऱ्यो । यसरी पहिलो पटक किसानहरूले प्रतिरोध गर्ने कुरा रेडियोबाट प्रसारण भएको करिब दुई घण्टामा नै काभ्रेको आन्दोलनको नेतृत्व गरिरहेको माओवादीको बैठक बस्यो । चौतर्फी दबाबको सामना गरिरहेको एकीकृत माओवादीले अन्ततः कृषि उत्पादनलाई बजारसम्म लैजान तयार नहुने हो भने प्रतिरोध हुने विषयलाई आँकलन गर्दै गम्भीर बन्यो । त्यसै दिन माओवादीका प्रतिनिधिले रेडियोमा फोन गरी दुई घण्टा तरकारी, दुध र फलफूल बजारसम्म लैजानको लागि समय दिने विषयमा सहमत भएकाले प्रसारण गरिदिन अनुरोध नै गऱ्यो ।

रेडियो नमोबुद्धले यो विषयलाई धेरै पटक प्राथमिकताकासाथ प्रसारण गऱ्यो । २०६६ चैत १९ गते किसानले केही त्रासको बीचमा बजारसम्म केही कृषिजन्य उत्पादनलाई पुऱ्याएर राहतको महसुस गरे । रेडियोबाट यसरी किसानहरू प्रतिरोधमा उत्रन लागेको विषयलाई किसानले रेडियोबाट भन्ने मौका नपाएको भए स्थानीय माओवादीको नेतृत्वले चासो लिने थिएनन । रेडियोले सबै क्षेत्रका अगुवालाई बोलाएर किसानको पीडा र भावनालाई राख्न दिएको अवसरले किसानले ठूलै राहत पाएको अगुवा किसान दिपक पौडेल वताउनुहुन्छ । पौडेलले भन्नुभयो -'रेडियोबाट नै प्रतिरोध गर्छौं भनेर नभनेको भए सायद तत्काल कृषिजन्य सामग्री बजारमा लैजान सम्भव हुने थिएन ।'

# आत्मनिर्भर मुसहर महिला

रुपन्देहीको केरवानी गाविस-९ स्थित सोइया गाँउको मुसहर बस्तीका महिलाहरू रेडियो लुम्बिनीका कारण नै आत्मनिर्भरताको अभियानमा जुटेका छन् । आर्थिक, सामाजिक र शैक्षिक रुपमा पछाडि परेका ती महिलाहरू आफूहरूले गरेको आम्दानीबाट छोराछोरीलाई शिक्षा समेत दिन थालेका छन् ।

एक्काइस घरधुरी रहेको यो मुसहर वस्तीका महिलाहरू घर बाहिर निस्कनु र परिवारभन्दा बाहिरका मानिससँग बोल्नुलाई नै पारिवारिक अनुशासन तोडिएको मानिन्थ्यो । त्यसमाथि महिलाहरू घरबाहिर पनि जान चाहँदैनथे । 'घरमा धेरै काम हुन्छ र घर बाहिर गयो भने घरको काम कसले गरिदिन्छ ?' उनीहरू प्रायः प्रश्न गर्थे ।

त्यसमाथि उनीहरूमा आफूहरू सानो जातिको मान्छे, नराम्रो छु ,बोल्न पनि जान्दिन, के बोल्ने र कसरी बोल्ने जस्ता कुण्ठा थोपरिएको थियो । सुरुमा रेडियो लुम्बिनीका प्रतिनिधिसँग समेत यस्तै भावना व्यक्त गरेका थिए । पिछडिएका समुदायका नागरिकहरूको बारेमा रेडियोमा नयाँ विषयको खोजी गर्ने क्रममा रेडियो लुम्बिनीको टोली २०६५ साल साउन १३ गते पहिलो पटक यो मुसहर बस्तीमा पुगेको थियो । आवाजविहिन समुदायको आवाजलाई सङ्कलन गरी प्रसारण गरिरहेको रेडियो लुम्बिनीले उक्त वस्तीको बारेमा अध्ययन गऱ्यो ।

रेडियोले उनीहरूको बारेमा रेडियो कार्यक्रम बनाउने भन्दा पनि बस्तीका सबै महिलाहरूलाई कसरी रेडियो सुनाउने भन्ने जुक्तिको खोजी सुरु गऱ्यो । यसैमा छलफल चलाउन थाल्यो । अन्ततः रेडियो लुम्बिनी बस्तीवासी महिलाहरूको लागि रेडियो श्रोता क्लब बनाउने निष्कर्षमा पुग्यो । रेडियो स्रोता क्लब बनाउन मुसहर बस्तीमा रेडियो कार्यक्रम संयोजक दुर्गा अर्याल र डेनमार्कका

**"रेडियोबाट धेरै कुरा सिक्न सकिने रहेछ । नयाँ नयाँ कुरा थाहा पाउन र निर्धक्कसँग बोल्न रेडियोले हामीलाई धेरै सघाएको छ ।"**

स्वयम्सेवी सल्लाहकार याकव थ्रोसेनलाई रेडियोले पठायो । रेडियोको टोली वस्तीमा त गयो । तर रेडियो टोलीसँग पहिलो दिन मुसहर बस्तीका महिलाहरू बोल्न नै चाहेनन् । रेडियोको टोली तीन चार पटक बस्तीमा गएर महिलाहरूसँग भेटघाट गर्न थालेपछि केही नजिक हुन थाले र समान्य कुराकानी गर्न थाले । अलिअलि भए पनि दबिएको स्वरमा आफ्ना समस्याहरू रेडियोको टोलीसँग राख्न सक्ने भए ।

'रेडियोका मानिस सधैं आउन थाल्नुभयो । के के सोधी रहनुहुन्थ्यो । सुरुमा लाजले कुराकानी नै गरेनौ । तर, आजकल नयाँ आउने मान्छेसँग बोल्न डर लाग्दैन,' स्थानीय चिरायती मुसहरले भन्नुहुन्छ, 'टोल बाहिरबाट आएका मान्छेहरूले देखे भने नराम्रो भन्छन् भनेर हामीलाई बोल्न लाज लाग्थ्यो तर, आजभोली त बोल्न अफठयारो लाग्दैन ।'

रेडियो लुम्बिनीको पहलमा २०६५ असोज १२ गते मुसहर बस्तीमा महिलाहरू रेडियो श्रोता क्लब गठन गर्न तयार भए । बस्तीवासीले विष्णु कुमालको अध्यक्षतामा रेडियो श्रोता क्लब गठन गरे । उक्त बस्तीका सबै विषयलाई रेडियोले आफ्नो नियमित प्रसारणको विषयसँग मुसहर वस्तीलाई जोड्दै लिने काम गऱ्यो । क्लब गठनको एक महिना पछि महिला अधिकारकर्मी तथा अधिवक्ता मीना पाण्डेको सहजीकरणमा महिलाका समस्या र हक अधिकारको विषयमा छलफल कार्यक्रम समेत राखियो । त्यसपछि उनीहरू आफ्ना समस्याहरू छलफलमा भन्न थालेका छन् । आजभोलि मुसहर वस्तीका महिलाहरू बाहिर निस्कन्छन् र आफ्ना कुराहरू धक मानेर भन्छन् ।

'घर बाहिर निस्के पछि धेरै कुरा बुझ्न र सिक्न पाएका छौ,' श्रोता क्लबकी अध्यक्ष विष्णु कुमालको भनाई छ ,'घरमा मात्रै बसेर त केही गर्न नसकिदो रहेछ । अहिलेको युगमा घर बाहिर निस्केर धेरै कुरा जान्नुपर्ने रहेछ ।' मुसहर बस्तीकी अर्की महिला चेककला कुमाल भन्नुहुन्छ, 'कुनै सीप सिकेर आत्मनिर्भर बन्नुपर्छ भन्ने बारे हामीहरूले रेडियो सुनेर नै थाहा पाएको हो ।'

अहिले मुसहर बस्तीका विष्णु कुमाल सहित सावित्री मुसहर, शान्ति मुसहर, चिराइती मुसहर, सीता मुसहरलगायतका महिलाहरू सामाजिक अगुवाको भूमिका समेत निभाइरहेका छन् । उनीहरूको उत्साह र

जाँगर देखेर रेडियो लुम्बिनीले एमएस नेपाल नामक डेनमार्कको गैरसरकारी संस्थालाई सीपमूलक तालिम प्रदान गर्न अनुरोध गऱ्यो। रेडियोको पहलमा उक्त संस्थाले बस्तीका महिलाहरूलाई तीन महिने सिलाईकटाई र खेलौनाहरू बनाउने तालिम निःशुल्क सञ्चालन गऱ्यो। तालिम पाएपछि महिलाहरूले पेशालाई निरन्तरता दिने इच्छा व्यक्त गरे। रेडियोको सक्रियतामा एमएस नेपालको सहयोगमा बस्तीमा सामुदायिक भवन निर्माण गऱ्यो। यो कार्यमा सबै टोलबासी सक्रियातापूर्वक लागे। सामुदायिक भवनमा दश वटा सिलाई मेशिनको व्यवस्था महिलाहरूको सक्रियतामा भएको छ।

त्यसपछि उनीहरूले सिकेको सीपलाई निरन्तरता दिएका छन्। उक्त सामुदायिक भवनमा कपडा सिलाउने महिलालाई एमएस नेपालले मासिक रु. ३ हजार दिन्छ। संस्थाले सिलाउनका लागि कपडाहरू प्रदान गर्छ। यसरी मुसहर महिलाहरूले तयार गरेका र सिलाएका सामानहरू डेनमार्क नै लैजाने व्यवस्था मिलाइएको छ। संस्थाको काम बाहेक उनीहरू यो मेसिन घरका कपडाहरू सिलाउन र छरछिमेकीका कपडा सिलाएर दुईचार रुपैयाँ थप आम्दानी गर्न समेत उपयोग गरिरहेका छन्। उनीहरूले कपडा सिलाउने सीप सिकेर कुसन, चकटी र विभिन्न किसिमका खेलौना तयार पनि गर्छन् र त्यसबाट केही आम्दानी पनि गर्न थालेका छन्।

नियमित आम्दानी हुन थालेपछि उनीहरू मासिक रुपमा ५ सय देखि १ हजार रुपैयाँ सम्म बचत समेत गर्न थालेका छन्। सिलाइ पेशासँगै बस्तीका महिलाहरूको बँगुर पालन र कुखुरापालन व्यवसायप्रति पनि आकर्षण बढेको छ। मुसहर महिलाहरू मिलेर नियमित मासिक बचत गर्ने गर्छन् र काम परेको वेला रु.१ का दरले मासिक ब्याजमा सापटी लिएर काम चलाउँछन्। यसअघि दैनिक मजदुरी गर्ने महिलाहरू घर र सामुदायिक भवनमा काम गरेर आम्दानी गर्न सकेकोमा निकै खुशी छन्। उनीहरूले सामुदायिक भवनमा रेडियो लुम्बिनीले रेडियो सुन्नका लागि रेडियो सेट नै जडान गरिदिएको छ। कपडा सिलाउँदै रेडियो सुन्ने सम्झना कुमाल भन्नुहुन्छ, 'रेडियोबाट धेरै कुरा सिक्न सकिने रहेछ। नयाँ नयाँ कुरा थाहा पाउन र निर्धक्कसँग बोल्न रेडियोले हामीलाई धेरै सघाएको छ।'

# भ्यूटावरको स्थान विवाद सुल्झियो

बाग्लुङको भकुण्डे गाविसमा तीन वर्ष अघि नमूना भ्यू-टावर निर्माण गर्ने निर्णय भयो । निर्माणको लागि जिल्ला विकास समिति बाग्लुङबाट पहिलो चरणमा आर्थिक वर्ष २०६४/६५ मा रु. तीन लाख बजेट विनियोजन भयो । भकुण्डेबाट धवलागिरी अञ्चलका तीन जिल्लाका सदरमुकाम र दर्जनौ हिमशृङ्खलाहरू सजिलैसँग अवलोकन गर्न सकिने भएकाले जिल्ला परिषद्ले त्यहाँ भ्यू-टावर निर्माण गर्नका लागि बजेट विनियोजन गरेको हो ।

स्थानीयस्तरमा नै भ्यू-टावर निर्माण समितिको गठन गरेर जिल्ला विकास समितिले बजेट र काम गर्ने जिम्मेवारी समेत सुम्पेको थियो । तर, स्थानीय स्तरमा भ्यू-टावर कहाँ राख्ने भन्ने विषयमा ठूलै विवाद भयो । विवादका कारण तीन वर्ष सम्म भ्यू-टावर बन्न नै सकेन । विवादमा अल्झिएर भ्यू-टावर निर्माणमा नै अवरोध पुगेको समयमा बाग्लुङ एफएमबाट साप्ताहिक रुपमा उत्पादन तथा प्रसारण हुने स्थानियस्तरको सार्वजनिक सुनुवाई कार्यक्रम 'हाम्रो सरोकार' को २०६७ वैशाख ४ गते शनिबारको श्रृखलामा सोही विषय छनोट गर्ने निष्कर्षमा रेडियो पुग्यो ।

बाग्लुङ एफएमले सरोकारवाला निकायलाई सार्वजनिक सुनवाई कार्यक्रममा सहभागी गरायो । कार्यक्रममा स्थानीय विकास अधिकारी विष्णुबहादुर थापा, योजना अधिकृत भेषराज शर्मा, भकुण्डे गाविसका पूर्व अध्यक्ष नरबहादुर थापा, गाविस सचिव हेमन्त रिजाल र भ्यू-टावर निर्माण समितिका अध्यक्ष दलबहादुर थापालाई सो कार्यक्रमको अतिथि बनाईयो । स्थानीय सरोकारवालाहरू, सबै राजनीतिक दलका स्थानीय नेता, समुदायका अगुवाहरू,समाजसेवी, शिक्षक, विद्यार्थीसहित करिब एक सयजना भन्दा बढीको सहभागितामा सार्वजनिक सुनवाई कार्यक्रम सम्पन्न भयो । सार्वजनिक सुनवाई कार्यक्रममा जिल्ला परिषद्मा जिविसले विनियोजन गरेको पैसाको दुरुपयोग र भ्यू-टावर निर्माणमा देखिएको विवादको विषयमा छलफल गराइयो । कार्यक्रमका अतिथि र सहभागी बीच यस विषयमा व्यापक छलफल र संवाद भयो ।

अन्ततः निर्माण स्थल विवादका कारण नै भ्यू-टावर निर्माण हुन नसकेको निष्कर्ष कार्यक्रमका सहभागीले निकाले । कार्यक्रममा उपस्थित स्थानीय विकास अधिकारी, पूर्व गाविस अध्यक्ष र भ्यू-टावर निर्माण समितिका अध्यक्ष लगायत सबै सहभागीहरूको एउटै निष्कर्ष रह्यो - जिविसले टावर निर्माण सम्पन्न भएको भनेर बजेट निकासा दिइसकेको तर स्थान विवादको कारण तीन वर्ष सम्म भ्यू-टावर निर्माण नहुनुमा आर्थिक अनियमितता र भ्रष्टचार नै मुख्य कारण हो ।

कार्यक्रममा स्थानीय विकास अधिकारी विष्णुबहादुर थापाले तत्काल भ्यू-टावर निर्माणको काम सुरु गर्न आग्रह गर्नुभयो । उहाँले भ्यू-टावर निर्माणको थालनी नगरिएमा भकुण्डेबाट भ्यू-टावर बनाउने कार्यक्रम नै हटाउन जिल्ला परिषद्मा प्रस्ताव लैजाने चेतावनी दिनुभयो । यो चेतावनी पछि सहभागी सबै गम्भीर मात्र भएनन् सबै स्थानीय सहभागीहरू भकुण्डेको मुलाबारीमा नै भ्यू-टावर राख्ने सहमतिमा पुगे । सहमति पछि निर्माण समितिले सार्वजनिक कार्यक्रममा नै भ्यू-टावर निर्माण गर्न तत्काल काम सुरु गर्ने प्रतिबद्धता जनायो । यो सहमति र प्रतिबद्धतालाई बाग्लुङ एफएमले प्राथामिकता साथ पटकपटक प्रसारण गऱ्यो । स्थानीय निर्माण समितिले सहमति भएको कुरा रेडियोले प्रसारण भएको तेस्रो दिन देखि नै भ्यू-टावर निर्माणको काम सुरु नै गऱ्यो ।

यसरी तीन वर्षसम्म स्थान विवादका कारण निर्माण हुन नसकेको काम रेडियो कार्यक्रमले नै सुरु गरिदिएको भनि भकुण्डेका स्थानिय सरोकारवालाहरू, सबै राजनीतिक दलका स्थानीय नेताहरू, समुदायका अगुवाहरू, समाजसेवीहरूले वाग्लुङ एफएमलाई श्रेय दिने गरेका छन् । "स्थानिय स्तरमा पटक पटक पहल गर्दा सम्पन्न हुन नसकेको विषय बाग्लुङ एफएमले सबै सरोकारवालालाई एकै ठाउँमा जुटाई सार्वजनिक सुनुवाई गरिदिएपछि विवाद मिल्यो" भकुण्डे गाविसका सचिव हेमन्त रिजालले बताउनुभयो । "भ्यू-टावर राख्ने स्थानका बारेमा सबैको स्वार्थ मिलेको थिएन, स्थानिय विकास अधिकारीले रेडियो कार्यक्रममा यो वर्ष पनि टावर नबनाए बजेट रोक्ने बताएपछि विवाद त्यही मिलिहाल्यो" टावर निर्माण समितिका अध्यक्ष दलबहादुर थापाले भन्नुभयो । उक्त कार्यक्रमलाई बाग्लुङ एफएमले प्रत्यक्ष प्रसारण गरेको थियो ।

# स्रोत जुटाउन सहयोग

दाङको सदरमुकामबाट प्यूठान स्थित धार्मिक क्षेत्र स्वर्गद्वारी मन्दिर जोड्ने सडकको अवस्था जीर्ण थियो । सडक मर्मतका लागि स्थानीय बासिन्दाले पटक पटक सम्बन्धित निकायमा पहल गरेपनि काम भने हुन सकेन । कतैबाट पनि सडक निर्माणका लागि पहल नभएपछि स्थानीय बासिन्दा सडक मर्मत गर्नका लागि आफै जुर्मुराए । उनीहरू महायज्ञ आयोजना गरेर रकम सङ्कलन गरी सडक मर्मत गर्ने टुङ्गोमा पुगे । महायज्ञ आयोजनाका लागि उनीहरूले दाङ उद्योग वाणिज्य सङ्घलाई मुख्य आयोजक बनाए ।

समितिको पहलमा २०६० चैत १७ देखि २४ गते सम्म महायज्ञ सञ्चालन भयो । रेडियो स्वर्गद्वारी एफएमले पनि महायज्ञ सञ्चालनमा सहयोगीका भूमिका निर्वाह गर्न आयोजक समितिको अनुरोध अनुसार सहमत भयो । दाङको सदरमुकाम घोराहीमा आयोजित उक्त महायज्ञमा सबै भन्दा धेरै दान दिनेहरूको नाम रेडियोबाट प्रसारण गर्नेमा रेडियो सहमत भयो । रेडियोले महायज्ञमा दान गर्नेहरूसँग कुराकानी गरी प्रसारण गर्न थालेपछि अरु मानिसलाई पनि दान दिन प्रेरित गऱ्यो ।

महायज्ञमा सामाजिक कामका लागि धेरै दान दिनेहरू क्रमशः चन्द्रबहादुर डाँगी, खिमकुमारी श्रेष्ठ, लोक सिंह बुढाथोकी, टेकनाथ गौतम, रामबहादुर कुवँर, प्रदिपकुमार योगी, खगराज लोहनी, किरण दाहाल, ट्रक व्यवसायी समितिका प्रतिनिधि र बरख गणका प्रतिनिधिहरूसँग सामाजिक विकासका गतिविधिमा कुराकानी गरी प्रसारण गरेर समुदायलाई उत्प्रेरित गर्ने काम गऱ्यो ।

यसरी महायज्ञमा दान गर्नेहरूसँग गरिएको कुराकानीले अरु मानिसलाई पनि दान गरी सहयोग गर्न प्रेरित गरेको थियो । महायज्ञमा दान गर्ने चन्द्रबहादुर डाँगीको रेडियोमा प्रसारण भएको कुराकानी सुनेर नेपाल परिवार नियोजन सङ्घका तत्कालिन लेखा अधिकृत शिवकुमार भट्टराईले ५ हजार रूपैयाँ सहयोग गर्नुभयो । उहाँले भन्नुभयो, 'मैले रेडियोमा चन्द्रबहादुर डाँगीको कुरा सुने । उहाँको समाजसेवा

प्रतिको योगदानले मलाई पनि सामाजिक विकासका लागि केहि गर्नुपर्छ भन्ने भावना जाग्यो ।' महायज्ञका मुल पूरोहित शिरोमणी नारायण पोखरेलको कलात्मक प्रस्तुतीले महायज्ञमा धेरैलाई सामाजिक काममा अभिप्रेरित गरेको थियो । उहाँले रेडियोमा महायज्ञका गतिविधि सुनेर समुदायका मानिसहरू महायज्ञमा सहभागी भई मानव ज्ञानका बारेमा जानकारी लिन र सामाजिक कार्यका लागि सहयोग गर्न प्रेरित भएको बताउनुभयो । रेडियो स्वर्गद्वारीलाई महायज्ञ सफल पार्न सहयोग गरेकोमा आयोजक समितिलेअभिनन्दन समेत गर्‍यो ।

**"मैले रेडियोमा चन्द्रबहादुर डाँगीको कुरा सुने । उहाँको समाजसेवा प्रतिको योगदानले मलाई पनि सामाजिक विकासका लागि केहि गर्नुपर्छ भन्ने भावना जाग्यो ।"**

सात दिनसम्म चलेको महायज्ञबाट करिब एक करोड रुपैयाँ सङ्कलन भयो । संकलित रकमले घोराहीबाट स्वर्गद्वारी धार्मिक क्षेत्र पुग्ने बाटोको १५ किलोमिटर सडक मर्मत गरिएको छ । सडक मर्मत नहुँदा सार्वजनिक यातायात सञ्चालन गर्न कठिनाइ हुने सडकमा अहिले नियमित रुपमा यातायात सञ्चालन भइरहेको छ । सडक पूर्णरुपमा पिच नभएपनि यातायात आवागनमा भने सडक मर्मत गर्दा निकै सघाउ पुगेको छ । अहिले पनि रेडियाले विकास निर्माण सम्बन्धी कार्यक्रम सञ्चालन गर्दा सडक पूरै कालोपत्र गर्नपर्ने विषयमा सम्बन्धित निकाय र समुदायलाई घचघच्याई रहेको छ ।

सडक मर्मत भएपछि स्वर्गद्वारी आश्रम धार्मिक स्थलमा पुग्ने दशनार्थीको सङ्ख्यामा पनि वृद्धि भएको छ । स्वर्गद्वारी आश्रमको दर्शन गर्न आउने ३५ प्रतिशत थप दर्शनार्थी बढेको स्वर्गद्वारी आश्रम व्यवस्थापन समितिले जनाएको छ । यसरी रेडियोले सामाजिक कार्यका लागि रकम सङ्कलन गर्न महायज्ञ सञ्चालनका बारेमा रेडियोबाट कार्यक्रम सामाग्री प्रसारण गरेकाले महायज्ञ सफल पार्न सघाउ पुगेको दाङ उद्योग वाणिज्य सङ्घले जनाएको छ ।

# व्यवसायिक खेतीका लागि उत्प्रेरणा

दाङ जिल्लाको घोराही उपत्यकाका करिब तीनसय थारु युवायुवतीहरू व्यवसायिक तरकारी र अन्य खेतीमा संलग्न छन् । केहि वर्ष अघिसम्म कृषि मजदुरका रुपमा अर्काको खेतबारीमा काम गर्ने थारु युवायुवतीहरू अहिले आफै परिश्रम गरेर व्यवसायिक खेतीतर्फ लागेका छन् । उनीहरूले आफ्नै वा अरुको जमिन भाडमा लिएर व्यवसायिक खेती गरी आत्मनिर्भर बन्न पुगेका हुन् । व्यवसायिक खेतीतर्फ यी युवायुवतीहरूलाई आकर्षित गर्न रेडियो स्वर्गद्वारीमा प्रसारण हुने 'कृषिमा युवा' कार्यक्रमले मद्दत गरेको हो । रेडियो कार्यक्रममा जानकारी दिइने कृषिसम्बन्धी विविध जानकारीले आफूहरूलाई व्यवसायिक कृषक बन्न मद्दत गरेको उनीहरू बताउँछन् ।

रेडियोले २०६० साल कात्तिक २३ गते 'कृषिमा युवा' नामक साप्ताहिक कार्यक्रम प्रसारण गर्न लागेको सार्वजनिक सूचना प्रसारण गरेको थियो । सार्वजनिक सूचनामा रेडियो कार्यक्रममा समावेश गर्नुपर्ने विषयवस्तु, दाङमा तरकारी खेतीको सम्भावना र प्राविधिक पक्षका बारेमा रेडियोलाई जानकारी दिन अनुरोध गरियो । सार्वजनिक सूचना प्रसारण भएपछि जिल्ला कृषि विकास कार्यालय दाङले रेडियोमा सम्पर्क गऱ्यो । जिल्ला कृषि विकास कार्यालयका प्रतिनिधि र रेडियोको टिमबीच कार्यक्रममा समावेश गर्नुपर्ने विषयवस्तुका बारेमा छलफल भयो ।

छलफलमा रेडियोले किसानहरूसँग भेटी उनीहरूले जान्न चाहेका कृषिसम्बन्धी जानकारी र समस्या सङ्कलन गर्ने तथा ती जिज्ञाशाको उत्तर कृषि कार्यालयका प्राविधिकले दिने सहमति भयो । कार्यक्रममा किसान, कृषि विज्ञ, बेरोजगार र विदेशबाट फर्किएका युवा र कृषि कार्यालयका कर्मचारीहरूसँग अन्तर्क्रिया र कुराकानी गरी कार्यक्रममा प्रसारण गर्न थाल्यो । रेडियोमा कृषि सम्बन्धी नयाँ नयाँ प्रविधिका विषयमा जानकारी दिन टेलिफोन र पत्र आउन थालेपछि कृषि कार्यालयका प्राविधिकलाई प्रत्येक कृषि कार्यक्रममा आमन्त्रण गरी श्रोताको जिज्ञाशा मेटाउने काम गऱ्यो । रेडियो कार्यक्रम सुनेर यस क्षेत्रका थुप्रै थारु युवायुवतीहरूलाई वयवसायिक कृषि खेतीतर्फ प्रेरित गर्न रेडियो कार्यक्रमले

सघाउ पुऱ्याएको छ । थारु युवायुवतीहरू कृषि प्रविधिका बारेमा जानकारी लिन पत्र र टेलिफोन मार्फत रेडियोमा सम्पर्क गर्थे । उनीहरूले सम्पर्क गरेपछि व्यवसायिक कृषि प्रविधिका बारेमा जानकारी लिन रेडियोले कृषि कार्यालयमा जान उनीहरूलाई सुझायो ।

अहिले कयौं थारु युवायुवतीहरू व्यवसायिक कृषकका रुपमा परिचित छन् । ती मध्येका केहि हन्, घोराही नगरपालिका -४ का बुझाउना चौधरी, चिल्लु चौधरी, रामपुर गाविसका सुषमा चौधरी । २०५९ सालसम्म परम्परागत रुपमा निर्वाहमूखी खेती गर्दै आएका उनीहरू अहिले व्यवसायिक खेती गर्ने युवाहरूका रुपमा परिचित छन् । दाङको तरकारी उत्पादनलाई व्यवसायिक गर्नुपर्छ भनेर रेडियो स्वर्गद्वारीले किसानहरूलाई उत्प्रेरित गर्ने अभियान नै चलायो । रेडियो स्वर्गद्वारीले दाङको उत्पादनमूखि जमिनमा व्यवसायिक खेती गर्ने हो भने रोजगारीको अवसर वृद्धि हुने र काम गर्न विदेशिनु नपर्ने जस्ता सन्देश दिने खालका कार्यक्रमहरू २०५९ साल देखि प्रसारण गर्दै आएको थियो ।

व्यवसायिक कृषक बुझाउन चौधरीले स्थानीय गोरक्ष दैनिकमा अन्तर्वार्ता दिदै २०६४ साल माघमा रेडियो कार्यक्रममा प्रसारण हुने कृषि सम्बन्धी जानकारी पाएर आफूहरू व्यवसायिक तरकारी खेतीमा लाग्न रेडियो स्वर्गद्वारीले प्रेरित गरेको र कृषि कार्यालयले प्राविधिक परामर्श दिई आफूहरूलाई सक्षम बनाएको उल्लेख गर्नुभएको थियो । उहाँको यो भनाईले रेडियोको कार्यक्रम प्रभावकारी भएको पुष्टि हुन्छ । यो अभियानबाट प्रेरित भएर तरकारी व्यवसाय गर्नेको सङ्ख्या सुरुमा थोरै भए पनि अहिले यो सङ्ख्यामा वृद्धि भएको छ । करिब तीन सय थारु युवायुवतीहरू व्यवसायिक तरकारी खेतीमा लागेको जानकारी दिइएको छ । अहिले उनीहरू बिहानै तरकारी लिएर बजार आउँछन् । तरकारी बेच्छन् । तरकारी बेचेर आएको आम्दानीले जीविकोपार्जन गर्छन् । यसरी व्यवसायिक तरकारी खेती गरेर आम्दानीमा वृद्धि भएपछि थुप्रै थारु युवायुवतीको जीवनस्तर परिवर्तन भएको छ ।

व्यवसायिक कृषिमा संलग्न सुषमा चौधरी व्यवसायिक तरकारी खेती गर्न थालेपछि आम्दानी वृद्धि भई पारिवारिक जीवनस्तरमा निकै परिवर्तन आएको बताउनुहुन्छ ।

# सरसफाई जागरण

अव्यवस्थित सहरीकरणसँगै दाङको सदरमुकाम घोराही नगरपालिकाको रामजानकी टोल कुरुप मात्रै होइन टोलबासीले सडकमा जथाभावी फोहोर फालेकाले वातावरण नै दुषित बनेको थियो । टोललाई व्यवस्थित गर्न टोल विकास समिति गठन भएपनि प्रभावकारी काम भने हुन सकेको थिएन । टोल विकास समितिका पदाधिकारीहरू पनि टोललाई कसरी व्यवस्थित र फोहोर मुक्त पार्ने भन्ने अन्योलमा थिए । टोल समितिले सबैलाई जम्मा पारेर फोहोर सङ्कलन गर्ने जुक्ति निकाले । उनीहरूले टोलका मानिसहरूलाई जम्मा गरेर टोल सफा गरे । टोल सफाइको समाचार रेडियोलाई पठाए । रेडियोले सरसफाईको समाचारलाई प्राथमिकताका साथ प्रसारण गऱ्यो ।

टोल सरसफाइ सम्बन्धी समाचार प्रसारण भएपछि टोल समितिका पदाधिकारीहरू काम गर्न झन उत्साहित भए । उनीहरूले टोल विकास समितिका पदाधिकारीहरूको बैठक वोलाए । उनीहरूले बैठकमा रेडियोका प्रतिनिधिलाई समेत सहभागी हुन निम्तो दिए । बैठकमा रेडियो स्वर्गद्वारीका प्रतिनिधिले 'हरेक शनिवार टोल सफा गर्ने काम गरेमा टोल प्रदुषणबाट मुक्तसँगै टोलको वातावरण पनि राम्रो हुने' सुझाव दियो ।

रेडियोको सुझाव अनुरुप २०६२ साल चैत १८ गते रामजानकी टोल विकास समितिले टोलबासीको भेला वोलायो । भेलाले प्रत्येक शनिवार टोल सफा गर्ने निर्णय गऱ्यो । त्यसरी टोल विकास समितिले आफ्नो टोल सफा राख्नु आफ्नो दायित्व हो भन्दै प्रत्येक शनिवार टोल सफा गर्ने निर्णय गरेको पुस्तिकाको प्रतिलिपि रेडियोमा पठायो । रेडियोले प्रतिलिपि प्राप्त गरेपछि रेडियोका कारण रामजानकी टोलमा टोलबासी मिलेर प्रत्येक शनिवार सरसफाई गर्ने निर्णय गरेको समाचार प्रसारण गऱ्यो । समाचारमा उक्त टोल विकास समितिका पदाधीकारीसँग भएको कुराकानी पनि प्रसारण भयो ।

रेडियोबाट टोलबासीहरू मिलेर टोल सरसफाई गर्न लागेको समाचार प्रसारण भएपछि घोराही नगरपालिकाका अन्य टोल विकास समितिहरू

पनि टोल सरसफाइ गर्न प्रेरित हुन थाले । उनीहरूले पनि टोल सरसफाई गर्नका लागि टोलबासीहरूको भेला वोलाए । अहिले रेडियो समाचारको प्रभावका कारण स्वर्गद्वारी टोल समिति, टाउन प्लानिङ टोल समिति, अम्बिकेश्वरी टोल समिति, नयाँ बजार टोल समितिले साप्ताहिक रुपमा सरसफाई अभियान नै चलाए । उनीहरूले टोल सरसफाई गतिविधिलाई समाचारको रुपमा प्रसारणका लागि अनरोध गर्ने परम्परा नै बस्यो । घोराही नगरपालिका क्षेत्रका टोलहरूमा सरसफाई अभियानले तिव्रता पाएपछि रेडियो स्वर्गद्वारीले सरसफाईसँग सम्बन्धित साप्ताहिक कार्यक्रमको प्रसारण गर्न सुरु गऱ्यो । २०६२ सालदेखि रामजानकी टोल विकास समितिबाट सुरु भएको सरसफाई अभियानले हाल सम्म निरन्तरता पाएको छ । घोराही नगरमा रहेका सबै टोल समितिहरूले साप्ताहिक रुपमा शनिवार टोल सरसफाई गर्ने अभियान नै चलाएका छन् । उनीहरूले आफूले उत्पादन गरेको फोहोरमैला तोकिएको स्थानमा नै लगेर फाल्नुपर्ने नियम बनाएका छन् । यो नियममा सबै टोलबासीहरू बाँधिएका छन् ।

यसरी टोलमा हुने समान्य सरसफाईका गतिविधिलाई रेडियोले प्राथमिकताका साथ प्रसारण गरेपछि नगरपालिका क्षेत्रमा सरसफाइको अभियान नै चल्यो । घोराही नगरपालिकाले नगरपालिका क्षेत्रका टोलबासीलाई सरसफाई अभियानमा प्रेरित गरी नगर क्षेत्रलाई फोहोर मुक्त पार्न सघाएको भन्दै २०६५ सालमा सम्मान प्रदान गरेको थियो । सम्मान कार्यक्रममा अम्बिकेश्वरी टोल सुधार समितिकी अध्यक्ष शान्ता पोखेलले घोराहीमा टोलटोलमा सरसफाई अभियानमा स्थानिय बासिन्दालाई प्रेरित गर्ने काम रेडियो स्वर्गद्वारीले गरेको बताउनुभयो ।

अहिले रेडियोलाई जिल्लामा हुने सामाजिक काममा संलग्न गराउने परिपाटीको विकास भएको छ । खानेपानी डिभिजन कार्यालयले सञ्चालन गर्ने हरेक अभियानमा रेडियोलाई अनिवार्य संलग्न गराउने नीति बनाएको छ । उक्त कार्यालयले 'हात धुने तरिका र खुल्ला दिसा मुक्त क्षेत्र घोषणा अभियान'मा सरिक हुन रेडियोलाई औपचारिक रुपमा परिपत्र नै गरेको थियो । यसरी जिल्लामा हुने सामाजिक र विकास निर्माण गतिविधिबारे रेडियोलाई जानकारी गराउने संस्कृतिको समेत विकास भएको छ ।

# रातो लुगाको अभियान

बर्दिया जिल्लाको सदरमुकाम गुलरियामा २० जना विधवाले रातो कपडा लगाएको समाचार रेडियो स्वर्गद्वारीले २०५९ साल पुसमा प्राथमिकताका साथ प्रसारण गरेको थियो ।

रेडियोबाट प्रसारण भएको समाचार सुनेका स्थानीय दुई जना विधवा शारदा पोखेल र हुमा डि.सी. रेडियोमा नै आउनुभयो । उहाँहरूले दाङमा पनि यस्तै अभियान चलाउने इच्छा व्यक्त गर्नुभयो र यो अभियानमा रेडियोलाई सहयोग गर्न आग्रह समेत गर्नुभयो । त्यसपछि उहाँहरूको अभियानको विषयमा रेडियोले कार्यक्रम निर्माण गरी प्रसारण गर्ने निधो गऱ्यो । रेडियोको नियमित कार्यक्रम 'आजका कुरा' कार्यक्रममा यी दुई विधवासँगको रेडियो कुराकानी प्रसारण गरियो । रेडियोको कुराकानीबाट उत्साहित भएका विधवाहरूले संस्थानै खोलेर अभियान चलाउने निधो गरे ।

उनीहरूले विधवा महिला सरोकार केन्द्र नामक संस्था स्थापना गरे । संस्थामा २७ जना विधवा महिलालाई संगठित बनाए । उनीहरूले रेडियोको सभाकक्षमा विधवाको भेला गरी कार्यसमिति निर्माण गरे । उनीहरूले रेडियोलाई नै सम्पर्क कार्यालय बनाए । बिधवा महिलाको भेलाले रेडियो स्वर्गद्वारीका स्टेशन म्यानेजर दधिराम सुवेदीलाई सल्लाहकारमा मनोनयन गरेर विधान तयार गर्ने जिम्मेवारी दिए ।

उक्त संस्थाले दाङ जिल्लामा विधवाहरूलाई रातो लुगा लगाउन सचेतना अभियान चलाए । उनीहरूले विधवाले रातो लुगा लगाउन पाउनुपर्ने माग राखे । उनीहरूको अभियानलाई रेडियोले समाचार र कार्यक्रममा प्राथमिकता दिएर प्रसारण गर्न थाल्यो । उनीहरूले आयोजना गर्ने कार्यक्रमका सूचनाहरू रेडियोले नि:शुल्क प्रसारण गर्न थाल्यो ।

बर्दियामा विधवा महिलाले रातो लुगा लगाएको समाचारको प्रभावले यो संगठित अभियानको सुरुवात भएको हो । नेपालमा संगठित रुपमा विधवा महिलाले रातो लुगा लगाउने अभियान भने यो पहिलो हो । यो अभियानका अभियन्ताहरू राष्ट्रिय तथा अन्तर्राष्ट्रिय मञ्चमा सम्मानित

र पुरस्कृत हुँदा अभियान सफल पार्नमा रेडियो स्वर्गद्वारीको भूमिका महत्वपूर्ण भएको बताउँछन् ।

अभियानकर्मी हुमा डिसीले भन्नुभयो, 'हाम्रो अभियान रेडियो स्वर्गद्वारी जोडिएको छ । सुरुमा मलाई रेडियोमा अन्तर्वार्ता दिए । मैले विधवा भएर समाजमा बस्नु पर्दा भोगेका पीडा र वेदनाहरू राखे । आफूले बोलेको कुरा सुनेर आफैलाई खुशी लाग्यो । रेडियोको समाचार र कार्यक्रम सुनेर मलाई विधवा महिलाले रातो पहिरन लगाउनुपर्छ भन्ने अभियानमा लाग्न प्रेरणा जाग्यो ।'

उहाँको कथन थियो, '२०५९ साल पुस १० गते घोराहीमा विधवाहरूको भेला राख्ने सोच बनायौँ । विधवाहरूको भेलामा सहभागी हुन आग्रह गरिएको सूचना रेडियो स्वर्गद्वारीले निःशुल्क प्रसारण गरेर कार्यक्रम विधवा महिला जुटाउन ठूलो गुन लगायो । हाम्रो व्यक्तिगत प्रयास र रेडियोका कारण करिब २५ जना विधवा जुट्यौ ।'

उक्त भेलाले आफू रहेको स्थानका विधवा महिलाहरूलाई रातो लुगा लगाउन प्रेरित गर्दै यो अभियानमा सँगै लैजाने निर्णय गरे । उनीहरूले अर्को भेलाको मिति २०५९ पुस २६ गते तोके । तोकेको मितिमा भेला सञ्चालन गर्न निःशुल्क सूचना प्रसारण गरी कार्यक्रम आयोजना गर्न रेडियोले हल समेत उपलब्ध गरायो । सो भेलाले विधवाको क्षेत्रमा काम गर्न विधवा महिला सरोकार मञ्च गठन गर्‍यो । विधवा महिला सरोकार समूह विधिवत रुपमा जिल्ला प्रशासन कार्यालय दाङमा २०६० साल वैशाख २९ गते दर्ता भयो । संस्थाको अध्यक्षमा शारदा पोखरेल र सचिवमा हुमा डिसी रहनुभयो । विधिवत संस्था दर्ता गरी संगठित रुपमा उनीहरूले विधवा महिलाले रातो बस्त्र लगाउने अभियानलाई अगाडि बढाएका हुन् । उनीहरूको यो अभियानले अहिले पनि निरन्तर रुपमा चलिरहेको छ । रेडियोसँग उनीहरू आफूले सञ्चालन गर्न लागेको कार्यक्रमको बारेमा जानकारी गराउनुका साथै परामर्श समेत लिने गर्छन् । उनीहरूको यो अभियानलाई रेडियोले पूर्ण रुपमा सहयोग गरिरहेको छ । अहिले यो अभियान संगठित रुपमा दाङ जिल्लाबाट देशभरी नै फैलिएको छ । यसरी रेडियोले विधवाले रातो वस्त्र लगाउन पाउनुपर्छ भन्ने सामाजिक सुधारको अभियानमा सघायो ।

# विद्यालयमा खानेपानी व्यवस्था

बुद्धको जन्मभूमि लुम्बिनी नजिकै लुम्बिनी आदर्श गाविस-७ स्थित मनौरीमा रहेको मायादेवी प्राविका विद्यार्थीहरू पिउने पानीबाट बञ्चित थिए । विद्यालयमा पिउने पानीको व्यवस्था थिएन । विद्यालयमा अध्ययन गर्ने बालबालीकाहरू पानी पिउन एक किलोमिटर टाढाको गाउँसम्म जानु पर्थ्यो । बालबालीकाहरू प्रायः खाजा खाने समयमा पानी पिउन गएपछि विद्यालय फर्कन्नथे । उनीहरू त्यतैबाट घर जान्थे । विद्यालयमा पिउने पानीको व्यवस्था नहुँदा बालबालीकाहरूको अध्ययनमा बाधा पुगिरहेको थियो ।

रेडियो लुम्बिनीका संवाददाता विरेन्द्र मिश्रले विद्यालयमा खानेपानीको अभाव विषयमा तयार गरेको समाचार सामाग्री २०६२ साल पुस २८ गतेको समाचार वुलेटिनमा प्रसारण भयो । यसैगरी रेडियो लुम्बिनीको हरेक विहिबार बेलुका ६:३० बजे साप्ताहिक रुपमा प्रसारण हुने कार्यक्रम 'शैक्षिक चौतारी'मा पनि यस सम्बन्धी रिपोर्ट प्रसारण भयो । कार्यक्रम प्रसारण भएपछि वुटवलका समाजसेवी विमलानन्द उदय बोधराजले रेडियो लुम्बिनीका टेलिफोन गरेर कार्यक्रम सञ्चालक ईन्दिरा अर्यालसँग कुराकानी गर्दै 'आफूले विद्यालयमा धारा निर्माण गरी सहयोग गर्न चाहेको' जानकारी दिनुभयो ।

रेडियो लुम्बिनीले आफ्ना संवादाता विरेन्द्र मिश्रको सहयोगमा मायादेवि प्राविका प्रधानाध्यापक मातृकाप्रसाद मौर्यलाई समाजसेवी बोधराजसँग भेट गराईदियो । लगत्तै त्यसको १ हप्तामै समाजसेवी बोधराजको आर्थिक सहयोगमा विद्यालयमा खानेपानीको धारा बनाउने काम सुरु भयो । २०६२ साल माघ ६ गते विद्यालयमा हेण्ड पाइप धारा जडान भयो । बोधराजले धारा निर्माणका लागि चाहिने सामाग्री वुटवलबाटै पठाउनुभएको थियो । विद्यालयका प्रधानाध्यापक मौर्यले धारा निर्माण गर्न मजदुर खर्च समेत अठारदेखि बीस हजार रुपैयाँ लागेको बताउनुभयो ।

यसरी रेडियोमा बजेको समाचार र कार्यक्रमका कारण विद्यालयमा

धारा जडान भयो । पानी प्यास लाग्दा एक किलोमिटर टाढा पानी पिउन जाने बालवालिकाले विद्यालयमै पानी पिउन पाए । विद्यालयमै पानी पिउने व्यवस्था भएपछि विद्यार्थीहरूले विद्यालय छोड्ने क्रम घटेको प्रधानाध्यापक मौर्यले बताउनुभयो । उक्त विद्यालयमा गरिब दलित समुदाय चमार,पासी,मुराउका बालबालीकाहरू अध्ययन गर्छन् । गरिब परिवारका बालबालीकाहरू अध्ययन गर्ने विद्यालयमा स्थानीय दलित समुदायको आर्थिक अवस्था कमजोर भएकाले धारा निर्माण हुन सकेको थिएन । रेडियोमा समाचार र कार्यक्रम प्रसारण भएपछि गरिब दलित बालबालीका अध्ययन गर्ने विद्यालयमा पिउने पानीका धारा जडान गर्नमा सघाउ पुऱ्याएको छ ।

# दलित बस्तीका नाममा बजेट

रुपन्देहीको एकला गाविस-८ मा रहेको दलित बस्तीका मानिसहरू राज्यले आफ्नो समुदायको लागि छुट्टै बजेट विनियोजन गरेको छ भन्ने थाहा पाउँदा अचम्ममा परे । रेडियो लुम्बिनीसँग आवद्ध जनचेतना रेडियो श्रोता क्लवको आयोजनामा २०६३ साल मंसिर १२ गते 'जातिय छुवाछुत प्रथा' विषयमा छलफल कार्यक्रमको आयोजना गऱ्यो । छलफल कार्यक्रममा आधारित विषयहरूलाई समेटेर रिपोर्ट तयार गरी रेडियाले प्रसारण गऱ्यो ।

कार्यक्रममा स्थानीय जनार्दन लोद र शान्ति कोहारले 'सबैले मान्छे सबै बराबर हुन्छ भन्छन् तर गाँउमा हामीलाई अछुत भनेर सबैले छि-छि दुर-दुर गर्ने गरेको' उल्लेख गर्नुभयो । यो विषयलाई भोजपुरी भाषाको महिलासम्बन्धी कार्यक्रम 'आवाज' र जातिय समानताको कार्यक्रम 'जमर्को'मा कार्यक्रम तयार गरेर प्रसारण गऱ्यो ।

छलफलका सहभागिहरूले मानिसहरूबीच हुने जातिय विभेदका विषयमा कुरा उठाएका थिए । उनीहरूले सबै 'मानिसको रगत रातै हुन्छ, तर मान्छे मान्छे बीच यस्तो भेदभाव किन ? हामीहरूले बनाएको भवनमा बस्न हुने ? हामीहरूले जडान गरेको धाराको पानी खान हुने ? खेतबारीमा उब्जनी गरेको तरकारीहरू खान हुने तर हामीले छोएका

**रेडियोबाट दलित समुदायका लागि सरकारले बजेट छुट्टाएको समाचार प्रसारण भएपछि उनीहरूले आफ्नो समुदायको लागि रकम विनियोजन भएको जानकारी पाए र गाविस कार्यालयमा बजेट निकासा गर्न धाउन थाले ।**

खानेकुरा, पानी किन खान नहुने' लगायतका सवाल उठाएका थिए ।

छलफल कार्यक्रममा सहभागिहरूबीच समाजमा देखिएको छुवाछुत विभेदको अन्त्य गर्ने, यसका लागि दलित समुदायको निम्ति गाविसमा रहेको बजेटबाट केहि रकम छुट्टाउने र उक्त रकम छुवाछुत विभेद अन्त्य गर्न सचेतना कार्यक्रम सञ्चालन गर्ने सहमति जुट्यो । यसरी रेडियोमा प्रसारण हुने विभिन्न कार्यक्रम र समाचार वुलेटिनमा दलित समुदायका लागि सरकारले बजेट छुट्टाएको समाचार प्रसारण भएपछि उनीहरूले आफ्नो समुदायको लागि रकम विनियोजन भएको जानकारी पाए । उनीहरू गाविस कार्यालय र राजनीतिक दलका प्रतिनिधिलाई बजेट निकासा गर्न धाउन थाले । दलित समुदायका स्थानिय जनार्दन लोद, शान्ति कोहार, सुशिला हरिजन, वनारसीप्रसाद वि.क, चिन्की हरिजन, वर्सोना पासी, चम्पा पासी, हिरालाल हरिजन, रामसुहाग हरिजन लगायतले सक्रिय रुपमा पहल गरे । छलफलमा सहभागि गाविस सचिव रुस्तम अलिले दलित समुदायको विकासको लागि गाविसले सहयोग गर्ने प्रतिबद्धता जनाएकाले दलित समुदायका अगुवाहरू आफ्नो समुदायको विकासका लागि पहल गर्न थालेका हुन् ।

यसैगरी आर्थिक वर्ष २०६३।०६४ को एकला गाविसको गाउँपरिषद्ले महिला शसक्तिकरण, दलित जागरण र अपाङ्गहरूको लागि रु. ५० हजार रकम छुट्टायो । उक्त रकमले गाविसका नौ वटै वडाका बासिन्दा चार/चार जना दरले दलित परिवारका लागि ३६ वटा बाख्रा खरिद गरी वितरण गरिएको थियो । गाविसको रकम दलित समुदायका लागि विनियोजन गर्न विगतमा तयार नहुने स्थानीय राजनीतिक दलका प्रतिनिधिहरू छलफल कार्यक्रमपछि रकम छुट्टाउन तयार भएको गाविस

सचिव रुस्तम अलिले जानकारी दिनुभयो ।

३६ दलित परिवारलाई एक/एक वटा बाखा वितरण गरी बचेको रकमले दलित समुदायको विकासका लागि कोष नै खडा भयो । स्थानीय आमा समूहको नेतृत्वमा रहेको कोषको नाम नै 'दलित कोष' रहेको छ । अहिले बाखापालन गर्ने दलित परिवारलाई घर खर्च गर्न सहयोग पुगेको छ । कोषको रकमबाट आपतकालिन समयमा दलित समुदायको लागि खर्च गरिन्छ । कोषमा रहेको रकम आमा समूहले गाउँका दलित महिलाहरू सुत्केरी हुने बेलामा सापटीको रुपमा दिन्छन् । कोष भएपछि दुःख पर्दा ठूलाबडाकोमा माग्न जानु नपरेको स्थानीय सुशिला हरिजनले वताउनुभयो । त्यहिका स्थानीय पत्रकार प्रल्हाद यादवले आपतकालिन कोषबाट रकम सापटी दिन थालेपछि अस्पतालमा गएर सुत्केरी गराउने महिलाको सङ्ख्या बढेको जानकारी दिनुभयो । पहिले कमाएको रकम जति सबै खर्च गर्ने दलित समुदायका मानिसहरू अहिले आपतविपतका लागि रकम बचत गर्न थालेका छन् । उनीहरू आफ्नो हक र अधिकारका लागि समेत एकीकृत हुन थालेका छन् । यसरी रेडियोले चलाएको छलफल कार्यक्रमले दलितका नाममा रहेको बजेट छुट्टाउन सहयोग गर्नुका साथै दलित सशक्तिकरणमा पनि टेवा पुऱ्याएको छ ।

# कानपारा कल्याण

रुपन्देहीको गंगोलिय गाविसको वडा नम्बर ७ र ८ पर्ने कानपारा गाउँको आकार पहिले कस्तो थियो भन्ने कुरा अहिलेको पुस्तालाई थाहा नै छैन । अहिलेको पुस्ताले आफ्ना हजुरबुबाको पालामा धान उब्जाउने खेतमा खोला बगिरहेको देखेको छ । २ सय ४० बिघा क्षेत्रफलमा फैलिएको गाउँ अहिले घटेर १ सय ८० बिघामा खुम्चिएको छ । गाउँलेहरूका अनुसार कानपाराको ६० बिघा खेतीयोग्य जमिन बगरमा परिणत भएको छ । रोहिणी नदीमा आउने बाढीले बर्षेनी त्यस गाउँको करिब ३ बिघा जमिन कटान गर्ने गर्छ । तीनतिरबाट नदीले घेरिएको छ, कानपारा गाउँ । रोहिणी नदीमा आउने बाढीले वर्षेनी

गाउँको जमिन कटान गर्दै लगेको छ । गाउँका सबैजसो बासिन्दाको धेरैथोरै जमिन नदी कटानमा परिसकेको छ । नदी नियन्त्रणका लागि कुनै निकायबाट ठोस पहल हुन नसकेकोमा सधै स्थानिय बासिन्दाहरू गुनासो गर्थे । उनीहरू सरकारले नदी नियन्त्रणका कुनै योजना नबनाएकोले क्षति भोग्न परेकोमा चित्त दुखाउँथे । २०४७ सालमा गाउँमा आएको बाढीलाई सम्झदा स्थानिय बासिन्दाहरूको आङ अझै सिरिङ्ग हुन्छ । गाउँ नै टापु भएकाले पनि धनजनको क्षति पुनः दोहोरिने हो की भन्ने आशङ्काले वर्षायाममा उनीहरूलाई सधै पिरोलिरहन्छ । नदी नियन्त्रणका लागि त्यहाँ २/४ वटा जाली हाल्ने बाहेकको काम हुन सकेको थिएन ।

सिद्धार्थ राजमार्ग अन्तरगत वुटवल भैरहवा खण्डको कोटिहवाबाट साडे ७ किलोमिटर पूर्व लागेपछि कानपारा गाउँमा पुगिन्छ । गाउँलाइ पूर्व, उत्तर र दक्षिणबाट रोहिणी नदिले घेरेको छ । कानपाराको पूर्वमा सिक्टहन, उत्तरमा सिक्टहनको पुरषोत्तमपुर, दक्षिणमा हाटि फर्साटिकर र पश्चिममा हाटि फर्साटिकरको करुवानीसँग सिमाना जोडिएको छ । कानपारा गाउँमा १ सय ३० घरधुरी परिवार बसोबास छ ।

कानपारा गाउँको यो अवस्था बुझेर रेडियो लुम्बिनीले २०६७ साल असार २५ गते कानपारा गाउँको तटबन्धको विषयलाई लिएर नागरिक संवाद (सार्वजनिक सुनवाई) कार्यक्रमको आयोजना गऱ्यो । यो कार्यक्रमले जल उत्पन्न प्रकोप नियन्त्रण कार्यालय डिभिजन नम्बर ५ को ध्यान तान्न सफल भयो । रोहिणी नदीमा वर्षौंदेखि काम गरिरहेको डिभिजन कार्यालयले कानपारा सम्म पुग्न सकेको रहेनछ । रेडियो कार्यक्रम सुनेर डिभिजनका इन्जिनियर दुजेन्द्र बस्नेतलाई स्तब्ध बनायो । उहाँले त्यहाँको कहालीलाग्दो अवस्थाको अहिलेसम्म अनुमानसम्म नगरेको बताउनुभयो । डिभिजन इन्जिनियर बस्नेतले भन्नुभयो, 'रेडियो लुम्बिनीको नागरिक संवादले हामीलाई त्यहाँका मानिसले भोग्नुपरेको पीडाका बारेमा अवगत भएको छ । अब

**काम पूरा भएपछि स्थानीय बासिन्दाले डिभिजन कार्यालय र रेडियो लुम्बिनीलाई औपचरिक कार्यक्रम नै राखेर सम्मान गरेका थिए ।**

हामी छिट्टै नै कानपारा पुगेर काम गर्छौं ।' त्यस्तै डिभिजन प्रमुख शुसिलचन्द्र आचार्यले पनि कानपाराको बासिन्दाको पीडा कम गर्न तटबन्ध निर्माणका लागि काम गर्ने आश्वासन दिनुभयो । उहाँहरूले कानपूराको बासिन्दाको समस्या समाधान गर्न व्यक्त गरेको भनाईलाई रेडियो लुम्बिनीले प्रसारण समेत गऱ्यो ।

**डिभिजन इन्जिनियर दुजेन्द्र बस्नेतले भन्नुभयो, "रेडियो लुम्बिनीको नागरिक संवादले हामीलाई त्यहाँका मानिसले भोग्नुपरेको पीडाका बारेमा अवगत भएको छ । अब हामी छिट्टै नै कानपारा पुगेर काम गर्छौं ।"**

आश्वासन दिएको एक साताभित्रै डिभिजनको टोली कानपारा पुगेर त्यहाँको स्थलगत अवलोकन गरी नियन्त्रणको खाका समेत कोर्ने काम गऱ्यो । डिभिजन टोलीले स्थानीय बासिन्दासँग छलफल गरी तत्काल राहात स्वरुप ५० वटा बोरा र नाइलन जाली उपलब्ध गरायो ।

रोहिणी नदीमा तटबन्ध निर्माण गर्न स्थानीय पीडित, रेडियो लुम्बिनी र डिभिजन कार्यालयको त्रिपक्षिय समन्वयमा काम अघि बढ्यो । डिभिजनले केन्द्रमा पहल गरेर आर्थिक बर्ष ०६७/६८ मा नदी नियन्त्रणका लागि २० लाख रुपैयाँको बजेट विनियोजन गर्न सफल भयो । लामो समयदेखि देखि कानपाराबासीको मागको सुनवाई भई कानापारा गाउँमा केन्द्रिय स्तरबाट २० लाख रुपैयाको बजेट विनियोजन भई तटबन्ध निर्माण गर्ने काम समेत पूरा भएको छ । स्थानीय राजाराम चौधरीले भन्नुभयो, 'डिभिजन र रेडियो लुम्बिनीको भूमिकालाई हामी कहिल्यै भुल्न सक्दैनै । रेडियोको प्रभाव कति हुँदो रहेछ भन्ने कुरा हामीले बल्ल महसुस गऱ्यौ ।'

डिभिजन कार्यालयका इन्जिनियर बस्नेतले रेडियोले विकास निर्माणका मुद्दामा घचघच्याउँदा हाम्रो ध्यान गएकाले कानपारामा तटबन्ध निर्माणमा रेडियोको भूमिका महत्वपूर्ण भएको बताउनुभयो । उहाँले भन्नुभयो, 'धेरै ठाउँमा काम गर्दा हाम्रो ध्यान कानपारामा पुग्न सकेको थिएन । रेडियोले हामीलाई कानपारामा काम गर्न गम्भीर मात्र बनाएन,

बाध्य पनि बनायो ।' कानपारामा अहिले १ सय ३५ मिटर लामो स्पर निर्माण भएको छ । त्यसले रोहिणी नदीबाट हुने क्षतिलाई कम गरेको स्थानीय बासिन्दाको भनाई छ । ६ जिल्ला कार्यक्षेत्र रहेको डिभिजन नम्बर ५ कार्यालय भैरहवाले २०६८ सालमा पहिलो काम नै कानपाराबाट सुरु गरेको थियो । रोहिणी नदीले कटान गरिरहेको कानपाराको भूभाग बचाउन स्पर निर्माण, तारजाली सहितको पर्खाल बनाउने लगायतका सबै काम डिभिजनले गरेको छ । स्पर निर्माण गरी दुबै भागमा पर्खाल बनाइएको छ । स्थानीय भूबनोटका आधारमा क्षती कम गर्न बजेटले पुग्ने गरी काम भएको डिभिजनले जनाएको छ । स्थानीय राजाराम यादवको अध्यक्षतामा गठित उपभोक्ता समितिले तटबन्धको काम सम्पन्न गरेको हो । काम पूरा भएपछि स्थानीय बासिन्दाले डिभिजन कार्यालय र रेडियो लुम्बिनीलाई औपचरिक कार्यक्रम नै राखेर सम्मान गरेका थिए ।

# नर्सरीका लागि ७ लाख

बाग्लुङ एफएमको रेडियो कार्यक्रम 'हाम्रो सरोकार'का कारण अहिले पर्वतको मुडिकुवा गाविसमा तयार गरिएको नर्सरीबाट एक लाख लप्सीको बिरुवा उत्पादन गर्ने काम भएको छ । लप्सीको बिरुवा उत्पादन गर्नका लागि सात लाख रुपैयाँको बजेट छुट्टाउन रेडियो कार्यक्रमले मद्दत गरेको छ । पर्वत जिल्लाको मुडिकुवा गाविसमा सुरु गरिएको जैविक खेतीको विषयलाई २०६६ कार्तिक २१ मा रेडियो कार्यक्रम 'हाम्रो सरोकार' उत्पादनका लागि स्थानिय बासिन्दा र सरोकारवालाबीच छलफल राखेको थियो । उक्त कार्यक्रममा एकलाख लप्सीका बिरुवा रोपी पर्वत जिल्लालाई लप्सीमय बनाउने अवधारणा सहितको अभियानका बारेमा सहमति भएको थियो ।

पर्वतको मुडिकुवामा आयोजना गरिएको उक्त छलफलमा जिल्ला कृषि विकास कार्यालय पर्वतका बरिष्ठ कृषि विकास अधिकृत चन्द्रकान्त खनाल, पर्वत सामुदायिक विकास केन्द्रका जितबहादुर नेपाली सहभागी

हुनुभएको थियो । यसैगरी कार्यक्रममा जैविक खेतीका अभियानकर्ता एव मुडिकुवामा नमूना जैविक ग्रामको अवधारणा ल्याउनुहुने ऋृषिकेश तिवारीले टेलिफोन मार्फत कार्यक्रममा सहभागी हुनुभएको थियो । कार्यक्रममा मुडिकुवाका स्थानीय ३५ जनाको सहभागीता थियो ।

**"रेडियो सबै सर्वसाधरणको लागि घरमै बसीबसी परिणाम थाहा पाउने माध्यम बनेको छ । रेडियोले परिणाम प्रसारण नगर्दासम्म दुई दिनसम्म परिणाम थाहा नहुने अवस्थाको अन्त्य भएको छ । रेडियोबाट परिणामको प्रसारणले विद्यार्थी र अभिभावकलाई निकै सहयोग पुगेको छ ।"**

उक्त रेडियो कार्यक्रममा सहभागी जिल्ला कृषि विकास कार्यालय पर्वतका वरिष्ठ कृषि विकास अधिकृत चन्द्रकान्त खनालले मुडिकुवाका बासिन्दाले थालेको जैविक ग्रामको अवधारणालाई सहयोगका लागि आफूले तत्काल पहल गर्ने बताउनुभयो । त्यसैगरि ऋृषिकेश तिवारीले जैविक खेतीको अवधारणा सफल पार्न विभिन्न क्षेत्रबाट सहयोग जुटाएर सम्पन्न गर्ने रेडियो कार्यक्रममा प्रतिबद्धता व्यक्त गर्नुभयो ।

रेडियो कार्यक्रममा सम्बन्धित निकायमा एकलाख लप्सीका बिरुवा रोपी पर्वत जिल्लालाई लप्सीमय बनाउने अवधारणा तयार गर्ने सहमति भयो । यो अभियानलाई सघाउन वन तथा भूसंरक्षण मन्त्रालयले नर्सरी स्थापनाका लागि ७ लाख रुपैयाँको बजेट विनियोजन भयो ।

स्थानीय रुपमा सञ्चालन गरिएको जैविक प्रशोधन केन्द्रका लागि वन मन्त्रालयले जिल्ला वन कार्यालय मार्फत जिविकोपार्जनका लागि वन कार्यक्रम (एलएफपी) मा छुट्टाइएको पाँचलाख रुपैया रकम मध्ये दुई लाख पचास हजार रुपैयाँ रकम जैविक गाउँ मुडिकुवामा मात्रै विनियोजन भएको छ । "यसले मुडिकुवा गाविसका १२ सय घर परिवारका सदस्यहरू प्रत्यक्ष रुपमा लाभान्वित भएका छन् ।" समाजसेवी तथा जैविक गाउँ प्रवर्तक ऋृषिकेश तिवारीले बताउनभयो ।

यसरी रेडियो कार्यक्रममा गरिएको छलफलले लप्सीको बिरुवा उत्पादनका लागि नसंरी निर्माण गर्न बजेट छुट्टाउन मद्दत गऱ्यो ।

# घरघरमै एसएलसीको परिणाम

एसएलसी परिक्षा नेपालमा फलामको ढोकाका रुपमा परिचित छ । विद्यार्थीका लागि एसएलसी परिक्षा उतीर्ण गर्नु भनेको उच्च शिक्षाको लागि बाटो खुल्नु हो । त्यसैले एसएलसीको नतिजा आउने समयमा गाउँ घरमा परिक्षा दिएका विद्यार्थी र तिनका अभिभावकलाई नतिजा थाहा पाउने उत्सुकता हुन्छ । गाउँ घरमा पत्रिका ढिलो पुग्ने भएकाले एसएलसी परिणाम घरघरमा थाहा पाउने माध्यम बनेको छ रेडियो । हरेक वर्ष एसएलसी परीक्षाको नतिजा प्रकाशन हुने समय नजिक आउनासाथ गाँउ गाँउमा रहेका रेडियो मर्मत केन्द्रमा ठूलै भिडभाड हुन्छ । त्यसबाहेक नतिजा आउने बेला स्थानीय रेडियो पसलमा रेडियोको बिक्री पनि निकै हुन्छ । चार महिनामा बिक्री नभएका रेडियाहरू १५ दिनमा बिक्री हुन्छन् । खोटाङ जिल्लामा गएको चार वर्ष देखि हरेक वर्ष यस्तै हुने गरेको छ । जिल्लाको सदरमुकाम दिक्तेलमा रहेको रुपाकोट सामुदायिक रेडियो १०५ मेगाहर्जले २०६४ सालदेखि एसएलसी परिक्षाको नतिजा प्रकाशन भएकै दिन नाम र श्रेणीसमेत खुलाई रेडियोबाट प्रसारण गर्न थालेपछि रेडियोप्रति यस्तो आकर्षण भएको हो ।

जिल्ला शिक्षा कार्यालय खोटाङका शाखा अधिकृत कृष्णराज राईले एसएलसी नतिजा प्रकाशन हुनु अगावै फिल्डमा जाँदा गाउँ गाउँमा रेडियो बिग्रेको भएमा बनाउन पठाउने गरेको देखेको बताउनुभयो । उहाँले भन्नुभयो, 'एसएसली दिएका विद्यार्थी, तिनका अभिभावक र आफन्तलाई रेडियो किन्ने र बनाउने चटारोले छोएको हुन्छ । रुपाकोट रेडियोले नाम र डिभिजन नै सुनाउँछ तयारी रहनु पर्छ भन्ने कुरा सुन्दा रेडियोको प्रभाव र महत्व निकै भएको मैले पाए ।'

रेडियोबाट एसएलसी नतिजा भन्न सुरु गर्नु अघि २०६४ साल भन्दा अगाडी एसएलसी परिक्षा दिने व्यक्तिले आफ्नो परिणाम थाहा पाउन तीन दिन सम्म कुर्नु पर्दथ्यो । जिल्ला सदरमुकाम भन्दा टाढाटाढाका विद्यार्थीहरूले कि एक दुईदिन धाएर सदरमुकाम आउनु पर्थ्यो कि त नतिजा आएको समय भन्दा थप एक हप्ता कुर्नु पर्ने

अवस्थाको अन्त्य रुपाकोट सामुदायिक रेडियोले गरेको छ । पहिले त जिल्लाको ग्रामीण क्षेत्रका मानिसहरू सदरमुकाम आएर काठमाडौँमा आफ्ना आफन्तलाई फोन गरेर परिणाम थाहा पाउने प्रयास गर्थे । हाल गाउँगाउँमा फोन सुविधा भएपनि काठमाडौँमा परिणाम हरेर बताइदिने मान्छेको अभावमा परिणाम पर्खनुपर्ने अवस्थाको अन्त्य नै भएको छ । जिल्ला शिक्षा कार्यालयका श्रोत व्यक्ती प्रतिमान राई भन्नुहुन्छ, 'रेडियो सबै सर्वसाधरणको लागि घरमै बसीबसी परिणाम थाहा पाउने माध्यम बनेको छ । रेडियोले परिणाम प्रसारण नगर्दासम्म दुई दिनसम्म परिणाम थाहा नहुने अवस्थाको अन्त्य भएको छ । रेडियोबाट परिणामको प्रसारणले विद्यार्थी र अभिभावकलाई निकै सहयोग पुगेको छ ।' उहाँले आफूले पढाएका विद्यार्थी सफल वा असफल के भए भन्ने जिज्ञासा मेटाउनको लागि खर्च दिएर नै परिणमको अनौपचारिक जानकारी लिनुपर्ने बाध्यताको अन्त्य रेडियोले गरेको बताउनुभयो ।

रेडियोले नतिजा भन्नु भन्दा अगाडि विद्यार्थी, अभिभावक र तिनका आफन्त दिक्तेल बजार आउँदा एक हजार जति रकम खर्च हुन्थ्यो । यसरी रुपाकोट सामुदायिक रेडियोले आफैले नतिजा प्रसारण गर्न थालेपछि केहि वर्ष यताहरू उद्योग वाणिज्य सङ्घ लगायत व्यापारी तथा विभिन्न उच्चमावि तथा माविहरूले रेडियोको प्रायोजन गर्न थालेका छन् । यस वर्षको एसएलसी २०६८ को परिणाम भन्ने समयको लागि करिब ३५ हजारको समय प्रायोजन भइसकेको रुपाकोट सामुदायिक रेडियोका स्टेशन व्यवस्थापक टंकबहादुर थापाले बताउनुभयो ।

# विद्यालयमा बन्यो शौचालय

तेह्रथुम जिल्ला पिप्ले गाविस वडा नं १ डाँडाँखर्कमा रहेको कालिका प्राथमिक विद्यालयमा रेडियो मेन्छ्यायेममा समाचार प्रसारण भएपछि शौचालय निर्माण भएको छ। २०४७ सालमा स्थापना भएको यो विद्यालयमा शौचालय थिएन। शौचालय नहुँदा विद्यालयमा कखरा सिक्न आउने स-साना बालबालिकाहरूलाई के पढ्ने भन्दा पनि दिसा

**जिल्ला शिक्षा कार्यालयले भवन र शौचालय निर्माण गरिदिने प्रतिबद्धता दिएको विद्यालयका प्रधानाध्यापक बुढाथोकीले रेडियोमा आएर सुनाउनु भयो । उक्त खबरलाई रेडियो मेन्छ्यायेमले प्रथामिकताका साथ प्रसारण गऱ्यो ।**

पिसाब आयो भने कहाँ जाने ? भन्ने समस्याले पिरोल्थ्यो । यसले बालबालिकाको अध्ययनमा बाधा पुगिरहेको थियो । विद्यालयमा शौचालय बनाउनु पर्छ भनेर पटक पटक माग भरे पनि कतैबाट सहयोग प्राप्त हुन सकेको थिएन । २०६६ पुस १६ गते रेडियो मेन्छ्यायेममा विद्यालयमा शौचालय नहुँदाको समस्या बारेमा रिपोर्ट तयार गरी प्रसारण गऱ्यो । उक्त रिपोर्टमा शौचालय अभावका कारण विद्यालयमा अध्ययन गर्न आउने बालबालिका अध्ययन छोड्न बाध्य भएको विषय समावेश गरिएको थियो ।

रेडियोमा रिपोर्ट प्रसारण भएपछि यसले धेरैको ध्यान खिच्यो । जिल्ला शिक्षा कार्यालय तेह्रथुमले विद्यालयबारे जानकारी लिन विद्यालयका प्रधानाध्यापक शेरबहादुर बुढाथोकीलाई कार्यालयमा बोलायो । जिल्ला शिक्षा कार्यालयले विद्यालयलाई भवन र शौचालय निर्माण गरिदिने प्रतिबद्धता जनायो । जिल्ला शिक्षा कार्यालयले भवन र शौचालय निर्माण गरिदिने प्रतिबद्धता दिएको विद्यालयका प्रधानाध्यापक बुढाथोकीले रेडियोमा आएर सुनाउनु भयो । उक्त खबरलाई रेडियो मेन्छ्यायेमले प्रथामिकताका साथ प्रसारण गऱ्यो ।

रेडियोका कारण नै अहिले विद्यालयमा २ लाख रूपैयाँको दुई कोठे पक्की शौचालय निर्माण भएको छ । शौचालय निर्माण भएपछि विद्यार्थीले विद्यालय छोड्ने क्रम पनि रोकिएको छ । विद्यालयमा अध्ययन गर्न चाहने विद्यार्थीको सङ्ख्या पनि बढेको जानकारी विद्यालयका प्रधानाध्यापक बुढाथोकीले दिनुभयो । गाउँमा स्थापना भएको विद्यालयका लागि सहयोग जुटाउन धेरै पटक स्थानीयबासी र विद्यालयले विभिन्न निकायमा प्रयास गरेका थिए । तर, उनीहरूको प्रयासले सार्थकता पाउन सकेका थिएन । रेडियोमा प्रसारण भएको एउटा समाचारले भने सबैको ध्यान तान्यो ।

# म्याङलुङको सडकमा कालोपत्र

तेह्रथुमको म्याङलुङ बजार पूर्वाञ्चलको पहाडी जिल्लामा रहेको पूरानो बजार हो। यसले आफ्नै इतिहास बोकेको छ। जिल्लाको सदरमुकाम पनि रहेको म्याङलुङ बजारको सडक कालोपत्रे भने हुन सकेको थिएन। यो विषयमा रेडियो मेन्छ्यायेमले कार्यक्रम निर्माण गरी प्रसारण गऱ्यो। कार्यक्रम प्रसारण भएपछि जिल्लाका विभिन्न निकाय एकजुट भएर लागेपछि अहिले सडक कालोपत्रे हुन थालेको छ। बजारको बीच भागबाट सडक कालोपत्र गर्न थालिएको छ।

बसन्तपुर - म्याङलुङ सडक खण्डको २६ किलोमिटर सडकमा कालोपत्रे हुने भए पनि म्याङलुङ बजार भित्रको सडक कालोपत्रे भएको थिएन। ठेकेदारले म्याङलुङ बजार भित्रको सडक कालोपत्रे गर्ने सम्झौता नभएको भन्दै बजार बाहिरको सडकमा मात्र कालोपत्रे गर्ने भएको समाचार र कार्यक्रम रेडियो मेन्छ्यायेमले तयार गरी प्रसारण गऱ्यो। रेडियोले सडक कालोपत्रे विषयमा स्थानीय बसपार्क - पुतलिबजार सडक व्यवस्थापन समितिका अध्यक्ष होम लिम्बु र नेकपा एमाले तेह्रथुमका अध्यक्ष भवानी खापुङसँगको अन्तर्वार्ता प्रसारण गऱ्यो। अन्तर्वार्ता प्रसारण भएपछि यो विषयमा बजारबासीको चासो बढ्न थाल्यो।

रेडियो अन्तर्वार्तामा बसपार्क-पुतलिबजार सडक व्यवस्थापन समितिका अध्यक्ष होम लिम्बुले भन्नुभयो “हामीले धेरै पटक सडक निर्माणका लागि छलफलमा बोलाउँदा पनि उपभोक्ताहरू आएका थिएनन्। तर रेडियोमा कार्यक्रम प्रसारण भएपछि सबैको चासो बढ्यो। र, सम्बन्धित निकायबाट सुनुवाई भयो।” बजार भित्रको सडकमा कालोपत्रे गर्न माग गर्दै ०६७ कात्तिक २८ गते म्याङलुङबासीको प्रतिनिधिमण्डल गएर प्रधानमन्त्री, उपप्रधान तथा भौतिक योजना निर्माण मन्त्री, सङ्घीय मामिला तथा संस्कृति मन्त्री, कृषि तथा सहकारी मन्त्री, राष्ट्रिय योजना आयोगका पदाधिकारीहरूकहाँ सडक कालोपत्रे गर्ने माग राख्यो। सडक कालोपत्रेका लागि गएको प्रतिनिधिमण्डलको भेटका विषयमा रेडियोले समाचार तथा कार्यक्रमहरू बनाएर प्रसारण गरेको थियो।

**"जिल्लाका हरेक विकास निर्माणका गतिविधिमा रेडियोले चासो राखेमा काम छिटो र पारदर्शी रूपमा सम्पन्न हुने थियो ।"**

काठमाडौंबाट प्रतिनिधिमण्डल फर्किए लगत्तै उपलब्धिहरूका बारेमा रेडियो कार्यक्रम "युवा आवाज" मा सडक व्यवस्थापन समितिका अध्यक्ष होम लिम्बुको अन्तर्वार्ता लिएर प्रसारण गर्‍यो । यसैको परिणाम स्वरुप जिल्लामा भएका सरकारी तथा गैरसरकारी निकाय, नागरिक समाज सर्वपक्षीय राजनीतिक दलहरूसँगको छलफल र केन्द्रसम्मको प्रतिनिधिमण्डलका कारण आर्थिक वर्ष २०६८/६९मा सरकारको केन्द्रिय बजेटबाट रकम विनियोजन भएको छ । अहिले बजारमा सडक कालोपत्रेको काम भइरहेको छ । २०६९ असार मसान्तसम्म बजार भित्रका सबै सडकहरू कालोपत्रे भइसक्ने बसपार्क - पुतलिबजार सडक व्यवस्थापन समितिका अध्यक्ष होम लिम्बुले जानकारी दिनुभयो । उहाँले भन्नुभयो, 'रेडियोका कारण यो सडक निर्माणमा सबैको चासो बढ्यो । जिल्लाका हरेक विकास निर्माणका गतिविधिमा रेडियोले चासो राखेमा काम छिटो र पारदर्शी रुपमा सम्पन्न हुने थियो ।'

# विद्यालयमा स्रोत जुट्यो

समाद एफएमले २०६६ असारमा प्रसारण गरेको रेडियो कार्यक्रमका कारणले सिराहाको खौरकियाही गाविसमा रहेको एक विद्यालयको मुहार नै फेरिएको छ । उक्त कार्यक्रम प्रसारण भएपछि यसले सम्बन्धित निकायको ध्यान तान्न सफल भएको थियो । विद्यालयको भवन निर्माणसँगै जिल्ला शिक्षा कार्यालयले शिक्षक दरबन्दी समेत उपलब्ध गरायो ।

समाद एफएमको साप्ताहिक रेडियो कार्यक्रम 'रेडियो सवहके शिक्षा'मा खौरकियाही गाविसमा रहेको महद अल बनात अल सालिहात कन्या प्राथमिक विद्यालयको समस्याको बारेमा यथार्थ चित्रण सहितको रेडियो रिपोर्ट तयार गरी प्रसारण गरिएको थियो । यो विद्यालयमा हिन्दु र मुस्लिम बालबालिकाहरू अध्ययन गर्छन् । बालबालिकाहरू कक्षा

कोठाको अभावमा कोचाकोच गरेर बस्नुपर्ने बाध्यता थियो । कक्षा कोठा र शिक्षकको अभावका विद्यालयमा नियमित रुपमा पढाइ समेत हुन सकिरहेको थिएन । सो विद्यालयमा एउटै कक्षामा नियमित विषयका अतिरिक्त ईस्लामिक, नेपाली र अङ्ग्रेजी किताव अध्यापन हुने विषयमा रेडियो रिपोर्ट तयार गरी प्रसारण गरिएको थियो ।

**विद्यालयका प्रधानाध्यापक मोहमद इशा अन्सारीले भन्नुभयो, "जिल्ला शिक्षा कार्यालयमा धेरै पटक ताकेता गर्दा पनि नभएको काम रेडियोमा कार्यक्रम प्रसारण भएपछि भयो ।"**

जिल्ला शिक्षा कार्यालयबाट अनुमति लिएर सञ्चालित उक्त विद्यालयमा करिब १ सय ८० हिन्दु तथा मुसलमान विद्यार्थीहरू नियमित रुपमा अध्ययन गरिरहेका थिए । विद्यालयमा भवन र शिक्षकको अभावका बारेमा जिल्ला शिक्षा कार्यालय सिराहमा विद्यालयका प्रधानाध्यापक र व्यवस्थापन समितिका पदाधिकारीहरूले धेरै पटक पुगेर आवश्यक व्यवस्था मिलाइदिन माग समेत गरेका थिए । तर त्यसको सुनवाई जिल्ला शिक्षा कार्यालयबाट भएको थिएन । यी सबै विषयलाई समेटेर रेडियो कार्यक्रम प्रसारण भएपछि सोही आर्थिक वर्षमा जिल्ला शिक्षा कार्यालयले संयोजनमा जिल्ला विकास समिति र गाविसको समेत आर्थिक सहयोगमा विद्यालय भवन निर्माण भयो । उक्त भवनमा २०६७ साल देखि नै नियमित रुपमा पढाई भइरहेको छ ।

भवन निर्माण भएपछि विद्यालयलाई जिल्ला शिक्षा कार्यालयले एक राहत दरबन्दीमा शिक्षक उपलब्ध गराएको छ । अन्य शिक्षक भने स्थानीय समुदायले नै जुटाइरहेका छन् । 'रेडियोले विद्यालयको अवस्थाका बारेमा कार्यक्रम प्रसारण गरेकाले नै हाम्रो विद्यालयको भवन निर्माणसँगै राहत कोटामा शिक्षकको व्यवस्था भयो' विद्यालयका प्रधानाध्यापक मोहमद इशा अन्सारीले बताउनुभयो । उहाँले भन्नुभयो, 'जिल्ला शिक्षा कार्यालयमा धेरै पटक ताकेता गर्दा पनि नभएको काम रेडियोमा कार्यक्रम प्रसारण भएपछि भयो ।' अहिले भवन र राहत दरबन्दीका कारण विद्यालयको पठनपाठन सुचारु रहेको छ ।

# क्रसर उद्योग बन्द

समाद एफएमले सिराह जिल्लामा सञ्चालित क्रसर उद्योगका कारण चुरेको वातावरण विनास गरेको समाचार र कार्यक्रम निर्माण गरेर प्रसारण गरेपछि त्यसलाई रोक्न स्थानीय बासिन्दा ती उद्योगका बिरुद्धमा सडकमा नै उत्रिए र सिराहा जिल्ला नै बन्द गरे ।

राष्ट्रपति रामवरण यादवबाट चुरेको विनाश रोकेर संरक्षण गर्न आव्हान भइरहेको बेला रेडियोले चुरेका विभिन्न मुद्दामा नियमित रेडियो कार्यक्रम र समाचार निर्माण/प्रसारण गर्दै आएको थियो । समाचार र कार्यक्रममा क्रसर उद्योगका कारण त्यस वरिपरिको क्षेत्र मरुभूमिमा परिणत हुन थालेको सन्देश दिएका थियो । त्यतिबेला सिराहा जिल्लाको चुरे क्षेत्रमा भारतीय नागरिकको लगानीमा पाँचवटा क्रसर उद्योग सञ्चालनमा थिए । यसरी सञ्चालित क्रसर उद्योगले दैनिक उत्पादन गर्ने रोडा, गिटी र बालुवा लिएर सयौं ट्रक भारततिर जान्थ्ये । ति क्रसर उद्योग बन्द नगरे त्यसले चुरेलाई गम्भीर असर पारिरहेको थियो । चुरेको दक्षिणवर्ती क्षेत्रमा रहेको खेती योग्य जमिन उजाड बन्दै गएको विषयमा २०६६ असार १२ गते बिहान ९ बजे र बेलुका ४, ६ र ८ बजेको समाचार बुलेटिनमा रेडियो रिपोर्ट प्रसारण गर्‍यो ।

चुरे विषयमा निरन्तर रेडियोमा समाचार र कार्यक्रम प्रसारण भएपछि स्थानीयबासीले तत्कालै भारतीय लगानीमा सञ्चालनमा रहेका क्रसर उद्योग बन्द गर्नुपर्ने माग राखे । उनीहरूले चुरे क्षेत्रबाट निकासी पैठारी हुने दैनिक हजारौं ट्रक गिटी बालुवा लगायतका उत्पादनहरू रोक लगाउनुपर्ने माग राखी जिल्लाको यातायात, बजार, सरकारी र गैरसरकारी कार्यालयहरू बन्द नै गरे । २०६६ असार १३ गते रेडियोले स्थानीय प्रशासनले अनुमति दिएका क्रसर उद्योगले चुरेको विनाशसँगै वातावरणमा पारेको असरका बारेमा खोजमूलक रिपोर्ट तयार गरी प्रसारण गरेको थियो । रेडियोले राष्ट्रपति डा. रामवरण यादवले चुरे संरक्षणमा चिन्ता जाहेर गरेको समाचार प्रसारण भएपछि स्थानीयबासीले स्वतःस्फूर्त रुपमा बन्दको समर्थनमा उर्लिए । लामो समयदेखि धुलोधूवाँ र दैनिक हजारौंको सङ्ख्यामा गुड्ने ट्रकको आवाजले दिक्क भएका

**रेडियोले चलाएको संवाद कार्यक्रमपछि सोही दिन स्थानीय प्रशासनले अर्को सूचना नभए सम्मका लागि तत्काल ५ वटा नै क्रसर उद्योग बन्द गर्ने निर्णय गऱ्यो ।**

स्थानीयबासी रेडियोले त्यही विषयमा समाचार प्रसारण गरेपछि विरोधमा उत्रिन एकजुट बनायो । यसरी २०६६ असार १३ गते बजार बन्द भएपछि रेडियोले यस विषयमा संवाद कार्यक्रम नै चलाउने निर्णय गऱ्यो । रेडियोले स्टुडियोमै सभासद्द्वय रामरति राम, मृगेन्द्रकुमार सिंह यादव र बन्दकर्ता नागरिकलाई आमन्त्रण गरेर 'भूक्षय र चुरे संरक्षणमा' विषयक संवाद कार्यक्रम सञ्चालन गऱ्यो । रेडियो संवादमा उपस्थित सभासद्द्वयले सबै मिलेर यी गतिविधि रोक्नको लागि पहल गर्न सहमत भए ।

छलफलमा स्थानीय प्रशासनले अर्को निर्णय नभएसम्मको लागि क्रसर उद्योग बन्द गर्ने बताए । यो विषयलाई गम्भीर रुपमा संसदको बैठकमा उठाउने सांसदद्वयले आश्वासन समेत व्यक्त गरे । यसरी सभासद्ले रेडियो कार्यक्रममा यो विषयलाई उठाउने कुरा व्यक्त गरे । त्यसपछि स्थानीयबासी सोही दिन बेलुकादेखि यातायात लगायतका बन्द खुलाउन सहमत भए । सोही दिन स्थानीय प्रशासनले अर्को सूचना नभए सम्मका लागि तत्काल पाँचवटै क्रसर उद्योग बन्द गर्ने निर्णय गऱ्यो । उक्त कार्यक्रमलाई समाद एफएमले प्रत्यक्ष प्रसारण गरेको थियो । त्यसपछि सर्वोच्च अदालत र संसदले नै ती उद्योगहरू सञ्चालनमा रोक लगाएपछि हाल ती उद्योगहरू बन्द छन् ।

# ज्यालामा सहजीकरण

यो २०६४ साल असार र साउन महिनाको घटना हो । किसानहरूलाई खेतमा बाली लगाउने चटारोले छोपेकै बेलामा एक्कासी कृषि मजदुरले पाउने दैनिक ज्यालाका विषयमा किसान र कृषि मजदुरबीच विवाद बढ्यो । त्यसो त केहि समय यतादेखि नै ज्याला

कम भएको असन्तुष्टि कृषि मजदुरमा थियो तर सार्वजनिक मात्र हुन सकेको थिएन । उता किसान भने खेतमा अन्नबालीको उब्जाउ वृद्धि नभएर आम्दानी नबढेकाले ज्याला बढाउन नसक्ने बताउँदै आएका थिए । व्यक्ति-व्यक्ति बीचमा रहेको यो समस्या खेतमा बाली लगाउने समयमा कृषि मजदुरले प्रकट गरे । उनीहरूले ज्याला वृद्धि नभए काममा नजाने घोषणा समेत गरे । किसानले कृषि मजदुरलाई एक दिनको ज्यालाबापत ४ केजी धान र एक छाक खाना उपलब्ध गराउँदै आएका थिए ।

सुरुमा केही ठाउँमा छिटफुट रुपमा देखिएको ज्याला विवाद सिराहा जिल्लाका पडरिया, वस्तीपुर, महेशपुरलगायतका क्षेत्रमा विस्तार भयो । यो विवाद कृषि मजदुरले काम बन्द गर्ने आन्दोलनमा परिणत भयो । रेडियो समादले कृषि मजदुरको आन्दोलनको विषयमा नियमित कार्यक्रम बनाएर प्रसारण गर्न थाल्यो । रेडियोमा समाचार प्रसारण भएपछि यो जिल्लाव्यापी बन्न पुग्यो । रेडियोमा समाचार प्रसारण भएकै कारण किसानले कृषि मजदुर नपाएको गुनासो रेडियोमा आउन थाल्यो । समाद एफएमले रेडियोमा आएर किसानहरूले गरेको गुनासो र ज्याला वृद्धि नगरे किसानको खेतमा काम गर्न नजाने कृषि मजदुरको भनाईलाई समेटेर २०६४ साल असार १६ गते रेडियो रिपोर्ट प्रसारण गऱ्यो ।

किसानहरू रेडियोमा नै आएर यो समस्या समाधानको लागि पहल गरिदिन अनुरोध गर्न थाले । यो विषयलाई लिएर रेडियो समादले संवाद कार्यक्रम सञ्चालन गर्ने निधो गऱ्यो । रेडियोले अगुवा किसान र मजदुरलाई स्टुडियोमा बोलाएर दुबै पक्षबीच छलफल कार्यक्रम चलायो । संवाद कार्यक्रममा कृषि मजदुरले परिवार पाल्न गाह्रो भएको तथा किसानले उत्पादन हुन छाडेको विषयमा छलफल भयो । मजदुरले दैनिक ८ किलो धान र एक छाक खानाको माग गरे । तर किसानहरू त्यति दिन तयार भएनन् । मजदुर र किसानबीच व्यापक छलफल हुँदा ६ केजी धान र दुई छाक खाना दिनको लाीग दुबै पक्षबीच सहमति भयो । यो विषयलाई रेडियोले प्रथामिकता साथ प्रसारण गऱ्यो । रेडियोले सहजिकरणबाट किसान र मजदुरबीचको विवाद सहमतिमा टुङ्गियो । किसानको खेतमा काम गर्न सबै कृषि मजदुर तयार भए ।

# मन्दिर प्रवेशमा विवाद

घटना २०६७ साल साउन ३ गतेको हो । रुपन्देहीको वुटवल सहरसँगै जोडिएको शंकरनगर गाविसमा रहेको दुर्गा मन्दिरमा छुवाछुतको विवाद आयो । मन्दिरमा पूजा गरेको आरोपमा एकजना दलित महिलामाथि मन्दिरभित्रै दुर्व्यवहार गरियो । मंगल चौथीको अवसरमा शंकरनगर गाविसको जानकीनगरमा रहेको दुर्गा मन्दिरमा बिहानैदेखि स्थानीय महिलाहरूको ठूलो भिड लागेको थियो । त्यही भिडमा शंकरनगर कै पुनम विक पनि पूजासामग्री सहित मन्दिर पुगेकी थिइन् । पुनमभन्दा पहिला मन्दिर पुगेका स्थानीय ठूलो जातका भनिने महिलाहरू सीता केसी, सीवा क्षेत्रीलगायतले मन्दिरका पूजारी जर्नादन ज्ञवालीलाई पुनमलाई पूजा गर्न नदिन दबाब दिए । उनीहरूले मन्दिरमा पूजा गर्न आएको भनी पुनम माथि दुर्व्यवहार समेत गरे ।

पुनमले आफूले पनि पूजा गर्न पाउनु पर्ने अडान राखेपछि पूजारीले अलग्गै पूजापाठको प्रबन्ध गरिदिने वचन दिए । तर कथित माथिल्ला जातका महिलाहरू भने त्यसमा सहमति जनाएनन् । उनीहरू दलितले मन्दिरमा पूजा गरे अनिष्ठ हुने बताउँदै पूजा गर्न रोक लगाए । मन्दिरका पूजारी ज्ञवालीले पनि ती माथिल्ला जातका भनिने महिलाहरूसँग मिलेपछि पुनमले सामाजिक दुर्व्यवहार सहनुपऱ्यो ।

यो विषयमा पीडितको तर्फबाट जानकारी पाएपछि रेडियो लुम्बिनीले घटना भएको दोस्रो दिन साउन ४ गते समाचार तथा रेडियो रिपोर्ट तयार गरेर प्रसारण गऱ्यो । रेडियोमा समाचार प्रसारण भएपछि यो सबैको चासोको विषय बन्यो । घटनाको तत्काल छानबिन गरी समस्या समाधान गर्न स्थानीय दलित अगुवाहरूको नेतृत्वमा समिति समेत गठन भयो । रेडियो समाचार र कार्यक्रमका कारण स्थानीय प्रशासनले पुनम विकको जाहेरी दर्ता गर्न बाध्य भयो । कथित गैरदलित केहि महिलाहरूले दलित भन्ने थाहा पाएपछि पुनमलाई छुट्ट्याएर पूजा गर्ने योजना बनाएको र त्यसमा पण्डितले समर्थन गरेपछि समस्या देखिएको

पुनमका श्रीमान् एकनारायण विश्वकर्माले बताउनुभयो । पूजाकै विषयमा सो मन्दिरमा केहिबेर झगडा समेत भएको थियो ।

दलित अगुवाको सक्रियतामा गठित छानबिन समितिले घटनाका सबै पक्षसँग छलफल गऱ्यो । छलफल गरेर समितिले यस्तो निष्कर्ष निकाल्यो - मंगल चौथीको दिन अरु महिलासँगै पुनम विक पनि पूजा गर्न मन्दिर गएकी थिइन । उनी पनि मन्दिरमा पुगेर पूजाको तयारी गर्दै थिइन । उनीभन्दा पहिला पूजा गर्नको लागि बसेका महिलाहरू पुनमसँग बसेर पूजा गर्दैनौ भनेर उठे । गैरदलित महिलाहरूले पुनमसँगै पूजा नगर्ने बताएपछि एक्लै पूजा गर्न पूजारी पण्डित जनार्दन ज्ञवालीले आग्रह गरे । त्यसपछि केहिबेर विवाद कम भयो । तर पछि सबै गैरदलित महिला मिलेर पूजा नै गर्न नदिने स्थिति उत्पन्न भयो । सो कार्यमा पूजारी पण्डित जनार्दन ज्ञवालीले पनि सघाएको देखिएकोले कानुनी कारबाही हुनुपर्ने ठहरमा पुग्यो ।

यसरी पहिलो पटक रेडियोले दुर्व्यवहार गर्नेका रुपमा नाम लिएका ती महिलाहरूसँगै पूजारी पण्डित जनार्दन ज्ञवालीले प्रहरी प्रशासन र सार्वजनिक रुपमा माफी मागे । उनीहरूले अब कहिले पनि जातिय छुवाछुत भेदभाव नगर्ने प्रतिबद्धता जाहेर गरे । ईलाका प्रहरी कार्यालय वुटवलमा दुवै पक्षका बीचमा लिखित सहमति नै भयो । पीडित पुनम विकको जाहेरीको आधारमा पत्रकार, रुपन्देहीमा क्रियाशिल विभिन्न दलित सङ्घ/संस्था, मानवअधिकारकर्मीहरूको उपस्थितिमा ईलाका प्रहरी कार्यालय वुटवलमा भएको छलफलमा स्थानीय महिलाहरूले माफी मागी अबदेखि यस्तो नगर्ने लिखित प्रतिबद्धता गरेका हुन् । यस विषयमा पनि रेडियो लुम्बिनीले समाचार बनाई प्रसारण गऱ्यो ।

यसअघि २०६७ साल असार २१ गते पुनम सहितका त्यहाँका केही स्थानीय महिलाहरूले सँगै पूजा गरेका थिए । तर पछि पुनम दलित भन्ने थाहा पाएपछि उनीहरू टाढिएका थिए । 'सार्वजनिक मन्दिरमा जातकै आधारमा विभेद गर्न हुन्न भन्ने सबैलाई थाहा छ । तर, व्यवहारमा लागू गर्न गाह्रो छ । रेडियो लुम्बिनीले जातिय विभेद अन्त्य गर्न यो घटनामा सकारात्मक भूमिका खेलेको छ ,' स्थानीय हर्षबहादुर क्षेत्रीले भन्नुभयो ।

# पीडकले माफी मागे

२०६५ साल साउन ९ गते। घटना रुपन्देही जिल्लाको छोड्की रामनगर गाविस वडा नं ७ छोड्की पकडीहवाका जयराम चमारको सुँगुरले सोही गाउँमा बस्ने चिनक नाउँ र धुपा केवटको घरमा पसी भाडा छोयो। चिनक र धुपा गैरदलित परिवारका हुन्। घरमा सुँगुर पसेर भाडा छोएको निहूँमा गाउँमा विवाद भयो। दलितको सुँगुरले भाडा छोएकाले पूराना भाडाहरूको सट्टा नयाँ भाडा किन्नुपर्छ भन्दै चिनक र धुपाले रडाको मच्चाए। चिनक र धुपाको परिवारले जयराम चमारलाई गाली गलौज गरे। घटनाले ठूलै विवादको रुप लियो। विवाद बढ्दै गएपछि जयरामको साइकल उनीहरूले कब्जामा लिए। नयाँ भाडा किनेर नदिएमा कालोमोसो लगाएर गाउँबाट निकालादेखि ज्यान मार्नेसम्मको धम्की दिए। जयरामको परिवारले पीडा सहन नसकी ज्यान सुरक्षाका लागि प्रहरीमा उजुरी गरे। न्यायका लागि पहल गरिदिन रेडियो जागरणका स्थानीय समाचारदाता दिनेश हरिजन समेतलाई खबर गरे।

**दलितको सुँगुरले भाडा छोएकाले पूराना भाडाहरूको सट्टा नयाँझभाडा किन्नुपर्छ भन्दै चिनक र धुपाले रडाको मच्चाए, जयराम चमारलाई गाली गलौज गरे। घटनाले ठूलै विवादको रूप लियो। विवाद बढ्दै गएपछि जयरामको साइकल उनीहरूले कब्जामा लिए। नयाँ भाडा किनेर नदिएमा कालोमोसो लगाएर गाउँबाट निकाला गर्नेदेखि ज्यान मार्नेसम्मको धम्की दिए।**

सो घटनाको बारेमा वुटवल स्थित सामुदायिक रेडियो जागरणले सर्वप्रथम समाचार प्रसारण गऱ्यो। सो घटनाको बारेमा विस्तृत रुपमा बुझ्न रेडियो जागरणले आफ्नो रेडियोको टोलीसहित अन्य सञ्चारमाध्यममा कार्यरत

सञ्चारकर्मीहरूलाई घटनास्थलसम्म लैजाने कामको संयोजन गऱ्यो । घटनास्थल पुगेर फर्केपछि अन्य सञ्चारमाध्यमले पनि यो समाचारलाई उठाए । तर, यसले निरन्तर रुपमा महत्व पाएन । रेडियो जागरणले भने यो घटनालाई विशेष महत्व दिँदै करिब एक सातासम्म प्रसारण गऱ्यो । रेडियो जागरणले उक्त घटनालाई टुङ्गोमा पुऱ्याउन स्थानीय संवाददाता दिनेश हरिजनको नेतृत्वमा एक टोली समेत सो स्थानमा परिचालन गऱ्यो ।

रेडियोको टोलीले पीडक, पीडित पक्ष र प्रहरी प्रशासन समक्ष घटनाको बारेमा जानकारी लियो । रेडियोले घटनाका दोषीलाई कारबाहीको लागि प्रशासनले गरेका कामको बारेमा नियमित रुपमा समाचार बनाएर प्रसारण गर्न थाल्यो ।

घटनाको एक साता पछि चौतर्फी दबाब परेपछि पीडक पक्ष सामाजिक विभेद नगर्ने सर्तसहित भाडा लिन तयार भए । उनीहरूले आफूले गल्ती गरेको स्वीकार गरे र माफी मागे अनि यस्तो घटना अब नदोहोऱ्याउने प्रतिबद्धता जनाए । त्यसपछि दुवै पक्षबीच मिलापत्र भयो । सञ्चार माध्यमले यो घटनालाई गम्भीर रुपमा उठाएकाले पीडित पक्षले न्यायको राहत अनुभव गरे । जयराम चमारले भने, 'रेडियोले साथ नदिएको भए मैले न्याय नै पाउने थिएन । रेडियो जागरणका प्रतिनिधि दिनेश हरिजनले खुब साथ दिएर न्यायका लागि प्रहरी समक्ष जान मलाई सल्लाह दिनुभयो । रेडियो जागरणबाट समाचार प्रसारण भएपछि प्रहरी प्रशासन पीडकलाई कारवाही गर्न जुर्मुराएपछि मिलापत्रमा कुरा आयो, र, हामी मिल्यौ ।'

# निर्वाचित दलित अध्यक्ष स्वीकार

कपिलवस्तु जिल्लाको सौरहा गाविस-१ पिपरहवामा रहेको श्री राष्ट्रिय प्राथमिक विद्यालयको व्यवस्थापन समितिको अध्यक्षमा अभिभावकहरूको मतदानबाट २०६४ साल पुस २१ गते स्थानीय सन्तोष हरिजन अत्याधिक मतले निर्वाचित भए। तर दलित भएकै कारण केही गैरदलितले सन्तोषलाई अध्यक्ष स्वीकार गरेनन्। सन्तोषको विजयलाई विद्यालयका शिक्षक, अध्यक्षका प्रतिस्पर्धी र केही स्थानीय गैरदलितहरूले अस्वीकार गर्दै उहाँलाई काम गर्न दिएनन।

यो घटनालाई सामुदायिक रेडियो जागरण वुटवलले गम्भीर रुपमा लियो। विद्यालयमा भएको विभेदको घटनालाई रेडियोले निरन्तर रुपमा प्राथमिकताका साथ प्रसारण गऱ्यो। घटनाको थप अनुसन्धान गर्न रेडियो जागरणले रेडियोमा कार्यरत रेडियोकर्मीहरूको एक टोली घटनास्थलमा नै पठायो।

उक्त टोलीले जिल्ला शिक्षा कार्यालय कपिलवस्तु, जिल्ला प्रशासन कार्यालय र जिल्ला प्रहरी कार्यालयका प्रमुखलाई भेट्यो। उक्त घटनाका बारेमा रेडियोमा निरन्तर रुपमा रिपोर्ट तयार गरेर सबैको प्रतिबद्धतालाई सार्वजनिक गर्ने काम पनि गरिरहयो। त्यस्तै टोलीले पीडक पक्षको भनाई, पीडित पक्षसँग भेटी घटनाको बारेमा जानकारी लिने काम गऱ्यो।

सामुदायिक रेडियो जागरणको सक्रियतामा सबै सरोकारवाला पक्षलाई धेरै पटक घचघच्याउने काम गरेपछि यो घटनालाई सबैले महत्वको साथ लिन बाध्य भए। अभिभावकद्वारा निर्वाचित अध्यक्ष सन्तोष हरिजनले निर्वाध रुपमा एक वर्षसम्म काम गर्न पाउनुपर्ने निर्देशन जिल्ला शिक्षा कार्यालयले दियो। यसरी अवरोध सिर्जना गर्ने गैरदलित समुदायले जिल्ला प्रशासन कार्यालय कपिलवस्तुमा आइन्दा कहिले त्यस्तो कार्य नगर्ने र सन्तोषलाई बिना अवरोध अध्यक्ष स्वीकार गरेर काम गर्न दिने लिखित सहमति भयो। यो सहमति पछि मात्र आफूले न्याय पाएको महसुस गरेको सन्तोष हरिजनले बताउनुभयो। उहाँले भन्नुभयो, 'प्रशासन दलितको सवालमा त्यति गम्भीर हुँदैन थियो। यदि रेडियोले यस विषयलाई प्राथमिकताका साथ उठाएर पहल नगरेको भए मैले काम गर्न पाउने थिइँन।'

# दलित बालबालिकालाई छात्रवृत्ति

कपिलवस्तुको बाँसखोर गाविस-९ गौरागाँउमा रहेको श्री नवदुर्गा प्राथमिक विद्यालयमा आर्थिक वर्ष ०६४/०६५ मा अध्ययनरत बालबालीकाको लागि ३३ वटा छात्रवृत्ति कोटा प्राप्त भएको थियो । तर दलित बालबालिकालाई छात्रवृत्ति नदिएर सो रकम अर्कै शिर्षकमा खर्च गर्ने निर्णय विद्यालय व्यवस्थापन समितिले गर्‍यो । छात्रवृत्तिमा आएको रकम अर्को शिर्षकमा खर्च गर्ने काम अनियमितता हो भन्दै सरोकारवालाको भनाईसहित सामुदायिक रेडियो जागरणले रिपोर्ट प्रसारण गर्‍यो । त्यसपछि त स्थानीय दलित समुदायका मानिसहरू भेला भएर आन्दोलन गर्ने निर्णय गरे ।

दलित बालबालिकाको लागि आएको छात्रवृत्तिको बजेट उनीहरूलाई नै दिनुपर्ने माग लिएर दलित समुदाय आन्दोलनमा उत्रियो । उनीहरूले विद्यालय व्यवस्थापन समितिका अध्यक्ष गेना कोहार र प्रधानध्यापक दीव्यकला पोखरेल सहित पदाधिकारीलाई बैठक गरिरहेको बेला विद्यालय कोठामा घेराबन्दी गरेर थुने । अभिभावक र दलित समुदायका मानिसहरूको आन्दोलन अगाडि विद्यालय व्यवस्थापन समितिले गल्ति स्वीकार गर्‍यो । सोही घेरावन्दीका बीचमा विद्यालय व्यवस्थापन समितिको बैठक बसेर पहिले गरेको निर्णय खारेज गरी छात्रवृत्ति दलित बालबालिकालाई वितरण गर्ने निर्णय गर्न समिति बाध्य भयो । त्यसक्रममा जिल्ला शिक्षा कार्यालयबाट प्राप्त भएको छात्रावृत्तिको रकम दलित विद्यार्थीलाई सात दिन भित्र वितरण गर्न विद्यालय व्यवस्थापन समिति सहमत पनि भयो ।

दलित बालबालिकाका लागि छात्रवृत्तिको लागि आएको रकमको दुरुपयोग नगरेको र सो रकमबाट विद्यालयको पर्खाल लगाउने निर्णये बैठकले गरेको व्यवस्थापन समितिका अध्यक्ष कोहारले आन्दोलित दलित समुदायलाई वताउनु भएको थियो । आन्दोलनरत अभिभावक र दलित समुदायले दलित बालबालिकालाई रकम वितरण गर्नुपर्नेमा जोड दिएपछि सो विषयमा सहमति भई निर्णय फेरिएको उहाँले वताउनुभयो ।

# सुरक्षा वेस क्याम्प राख्न बाध्य पार्‍यो

रुपन्देहीको गंगोलियाका नेत्रबहादुर राना २०६५ साल फागुनदेखि मात्र निर्धक्कसँग रातमा सुत्न थालेका छन् । असुरक्षाका कारण २ बर्ष अघिका रातहरू उनले जागा र अनिदो भएर बिताएका थिए । उनीसँगै गंगोलियका सबैजसोले हातमा भाला, हँसिया र लाठी बोकेर हप्तामा कम्तिमा २ रात जागा बस्नैपर्ने बाध्यता थियो । गाउँमा रातको समयमा दैनिक जसो लुटपाट र चोरी हुन्थे । यस्तो अवस्थामा धनसम्पति जोगाउन गाउँलेहरूलाई हम्मेहम्मे नै पर्‍यो । 'धेरै चल सम्पति हुनेले अन्यत्रै लगेर राख्ने काम समेत गरे । त्यो बेलामा कोही बिरामी परेमा अस्पताल लैजाने पैसा समेत साथमा नहुने अवस्था थियो', रानाले भन्नुभयो ।

२०६४ साल असोज २० गते गंगोलियामा पहिलो पटक २ घरमा लुटपाट भयो । त्यसको केही दिन बित्न नपाउँदै बरौलिया, पकडिहवा, गंगोलिया गाउँका गरी १४ घरमा शृङ्खलाबद्ध रुपमा डकैती भयो । डकैती र लुटपाटको जगजगीले गंगोलियाबासीलाई त्रसित बनायो । लुटपाट भएको भोलिपल्ट स्थानीय प्रशासनमा गाउँलेहरूले उजुरी गरे । सुरक्षाकर्मी घटनास्थलमा आउने मुचुल्का उठाउने काम बाहेक अरु केही गर्न सकेनन् ।

स्थानीय समुदायलाई धनभन्दा पनि ज्यान कसरी जोगाउने भन्ने चिन्ताले सताउन थाल्यो । गाउँले आफैले आफ्नो सुरक्षा गर्नुको कुरा गर्न थाले । गाउँलेहरूको बैठक बस्यो । बैठकले राती पालैपालो गस्ती गर्ने निर्णय गरे । गाउँलेहरू आलोपालो रुपमा राती १०-१५ जनाको सङ्ख्यामा गस्ती गर्न थाले । गस्ती हुन थालेपछि परिवार चनाखो गरी भए पनि सुत्न पाए । अगुल्टाले हानेको कुकुर बिजुली देखि चम्कन्छ भने झैं नचिनेका मान्छेको अनुहार देखेपछि त्यहाँका मानिसहरू झस्किन्थे ।

गंगोलियामा मात्रै होइन त्यही समयमा रुपन्देहीका अन्य केही स्थानमा पनि दिनहुँ जसो लुटपाटका घटना हुन थाल्यो । डाँकाको आक्रमणमा परी टिकुलीगढमा एक जनाको ज्यानै गयो । डाँकाको

आक्रमणमा गंगोलिया गाविस-३ देविनगर डाँडाका ४० वर्षीय होमबहादु छन्तेलको ज्यान गयो । घटना पछि प्रहरी प्रशासनले व्यापक सुरक्षाकर्मी परिचालन गरेको भन्दै जनतालाई आश्वस्त पार्ने काम पनि गर्‍यो । प्रहरीको गस्ती सन्तोषजनक नभएको देखेपछि गंगोलियावासीले आफ्नै गाउँमा प्रहरी चौकी स्थापनाको माग अघि सारे । ‘गाउँलेहरू सबैको हस्ताक्षर सहितको निवेदन जिल्ला प्रशासन कार्यालय र जिल्ला प्रहरी कार्यालयमा बुझायौं । आश्वासन त पायौ । तर, हप्ता, महिना हुँदै वर्ष बित्दा पनि चौकी भने स्थापना भएन,’ स्थानीय धनपति न्यौपाने भन्नुहुन्छ । गाउँमै चौकी राख्न गाउँलेले धेरै पटक प्रशासनमा दबाब दिए । प्रमुख जिल्ला अधिकारीको कार्यालयमा धर्ना समेत बसे । तर पनि उही आश्वासन बाहेक अरु केही हात परेन । यो क्रम पनि एक वर्षभन्दा बढी चल्यो । गंगोलिया सहित रुपन्देहीका टिकुलीगढ, मक्रहर, दुधराक्षलगायतका ठाउँमा डकैतीका घटना भइरहेका थिए ।

यस बीचमा पीडित जनताको मर्मलाई ध्यानमा राख्दै रेडियो लुम्बिनीले आफ्नो रेडियो कार्यक्रम सार्वजनिक सुनवाइमा शान्ति सुरक्षाको मुद्दा उठाउने निधो गर्‍यो । २०६५ साल पुस ७ गते सार्वजनिक सुनुवाई कार्यक्रम आयोजना गर्‍यो । कार्यक्रममा सहायक प्रमुख जिल्ला अधिकारी दुर्गाप्रसाद पोखेल र इलाका प्रहरी कार्यालय वुटवलका तत्कालीन प्रहरी नायब उपरीक्षक सुशीलकुमार यादवलाई सहभागी गरायो । कार्यक्रममा चोरी, डकैती र लुटपाटका घटनाका बारेमा छलफल चल्यो ।

गंगोलियाका एक युवकले गाउँको शान्तिसुरक्षाको अवस्था प्रति आक्रोश पोख्दै २ वटा मात्रै हतियार दिए गाउँलेले आफैले पूरा गाउँको सुरक्षा गर्ने बताए । । सोही ठाउँका नेत्रबहादुर रानाले चौकी स्थापना नभए प्रशासनमा धर्ना दिने र तालाबन्दी गर्ने चेतावनी दिए । जवाफमा सहायक प्रजिअ पोखरेलले प्रक्रिया अगाडि बढाउने र मन्त्रालयबाट निर्णय आएपछि चौकी स्थापना गर्ने सार्वजनिक रुपमा आश्वासन दिन बाध्य भए । तर जनताले विश्वास गरेनन् । त्यसपछि कार्यक्रम आयोजकको हैसियतमा जिल्ला प्रशासन कार्यालयसम्म कुरा पुर्‍याउने र बारम्बार दबाब दिने जिम्मा रेडियो लुम्बिनीलाई दिने सहमति भएर कार्यक्रम सम्पन्न भयो । कार्यक्रममा उठेका विषयलाई २०६५ साल पुष ९ गते रेडियो लुम्बिनीबाट प्रसारण भयो ।

**'रेडियो लुम्बिनीले दबाब नदिएको भए हाम्रो गाउँमा सशस्त्रको क्याम्प रहने थिएन ।'**

सार्वजनिक सुनवाईले दिएको जिम्मेवारी अनुसार रेडियो लुम्बिनीले प्रजिअ चिरिञ्जीवि वाग्ले र प्रहरी उपरीक्षकलाई सो समस्याका बारेमा निरन्तर अवगत गरायो । रेडियोले गाउँलेको पीडा समेटिएको कार्यक्रम सुन्न समेत आग्रह गऱ्यो । उहाँहरूबाट रेडियोले सकारात्मक काम गरेको र जनतालाई तत्काल शान्तिसुरक्षाको लागि पहल गर्ने प्रतिक्रिया प्राप्त भयो । त्यसपछि पनि रेडियो लुम्बिनीले धेरै पटक सम्पर्क गरेर यो विषयमा भइरहेको कामको बारेमा जानकारी लिइरहयो । अन्ततः गंगोलियामा सशस्त्र प्रहरीको वेश क्याम्प नै राख्ने निर्णय भयो । त्यस लगत्तै २०६५ साल पुस २८ गते गंगोलियाको वरौलिया डाँडामा सुरक्षा वेश क्याम्प स्थापना भयो ।

क्याम्प स्थापनापछिको अवस्था बुझ्न रेडियो लुम्बिनीको टोली २०६५ साल फागुन १८ गते सोही स्थानमा पुग्यो । त्यहाँ पुग्दा स्थानीय दयाराम भट्टराईले खुसी व्यक्त गर्दै भन्नुभयो, "रेडियो लुम्बिनीले दबाब नदिएको भए हाम्रो गाउँमा सशस्त्रको क्याम्प रहने थिएन ।" अहिले त्यहाँका जनता ढुक्कसँग सुत्न पाएका छन् । रात्रीको समयमा पहरा बस्नुपर्ने गाउँलेहरूको बाध्यताको अन्त्य भएको छ । डर त्रासमा रहने गाउँलेहरू अहिले रातको समयमा पनि एक्लै दुक्लै गाउँमा हिंडन डराउँदैनन् । त्यसयता गंगोलियमा चोरी डकैतीका घटना पनि घटेको छैन । गँगोलियामा अहिले सशस्त्र प्रहरी निरीक्षकको नेतृत्वमा ४६ जनाको टोली सहितको सुरक्षा बेस क्याम्प रहेको छ । सुरक्षा बेस क्याम्पले गंगोलिया सहित बसन्तपुर, मक्रहर, हाटिफर्साटिकर, मधौलिया,पडसरी र करहिया गरी ७ वटा गा.वि.समा सुरक्षा दिने काम गरेको छ ।

प्रहरी निरीक्षक गोपाल श्रेष्ठका अनुसार दिउँसोमा २ र रातिमा २ गरी ४ वटा सशस्त्र प्रहरीको टोलीले निरन्तर गस्ती गरिरहेका छन् । जसका कारण चोरी डकैतीसँगै तस्करी र आपराधिक गतिविधि समेत नियन्त्रणमा आएको उहाँको भनाइ छ । प्रहरी र जनताको सहकार्यमा अहिले त्यो क्षेत्रको शान्तिसुरक्षा सन्तोषजनक भएको छ ।

# कर्मचारी समयमै कार्यालयमा

सामुदायिक रेडियो जागरणले २०६५ सालमा 'अफिस अफिसमा' भन्ने कार्यक्रम सुरु गऱ्यो । रेडियो जागरणका रेडियोकर्मीहरू सरकारी कार्यालय सुरु हुने समयमा ती कार्यालयमा पुगेर कर्मचारी समयमा आए नआएको बारे रेडियोमा प्रसारण गर्न थाल्यो । यसरी रेडियोमा नाम प्रसारण हुन थालेपछि सरकारी कर्मचारीहरू समयमा नै कार्यालय आउन बाध्य हुन थाले । कार्यलयमा समयमा काम हुन्छ कि हुँदैन र सेवाग्रहीले सेवा पाएका छन कि छैनन भन्ने उद्देश्यले सुरु गरेको यो कार्यक्रम निकै प्रभावकारी रहयो ।

रेडियो जागरणका रेडियोकर्मीहरू बिहान ठिक १० बजे सरकारी कार्यालयमा पुग्थे । कार्यालय समय सुरु हुने बेलामा को कर्मचारी आउँछन । को आउँदैनन् ? कार्यालयमा आएका सेवाग्राहीले भनेको समयमा सेवा पाएका छन् कि छैनन् ? कार्यालय प्रति उनीहरूको धारणा कस्तो छ ? कार्यालयहरूमा हुने भ्रष्टाचार र ढिलासुस्ती आदिको अनुगमन गरेर त्यसको रिर्पोट रेडियोबाट प्रसारण हुन्थ्यो । कार्यालयबाट कार्यक्रम प्रत्यक्ष प्रसारण हुने भएकाले सरकारी कार्यालयका सबै कर्मचारहरू सचेत हुन थालेका थिए ।

कार्यक्रम सुरु भएको पहिलो हप्तामा वुटवलमा रहेका सरकारी कार्यालय इलाका वन कार्यालय, इलाका प्रशासन कार्यालय, सडक कार्यालय, आन्तरिक राजश्व कार्यालय आदिमा ठूलै प्रभाव पऱ्यो । तत्कालै कार्यालय प्रमुखहरूले आफ्ना सबै कर्मचारीहरूको भेला बोलाई रेडियोले कार्यालयबाट प्रत्यक्ष प्रसारण गर्ने भएकोले समयमा नै कार्यालयमा उपस्थित हुन र सेवाग्राहीलाई सेवा चाँडोभन्दा चाँडो सेवा दिन निर्देशन नै दिए ।

यसरी रेडियो जागरणले थालेको कामले कार्यालयका कर्मचारीहरू समयमा नै कार्यालय आउने थालेका छन् । सेवाग्राहीको काममा ढिलासुस्ती गरे सञ्चार माध्यममा आउने भएकाले काम छिटो सक्नु पर्छ भन्न मान्यताको विकास सरकारी कर्मचारीमा हुन थालेको छ ।

# खेतका खम्बा सडकमा

रेडियो लुम्बिनीका कारण रुपन्देहीको आनन्दवन गाविस वडा नं ७ गणेशपुरमा १ वर्षदेखि अलपत्र रुपमा फ्याँकिएका विद्युतको खम्बालाई व्यवस्थित गर्ने काम भएको छ । २०६५ साल मंसिर २५ गते "विद्युत समस्या र उपभोक्ताको जिज्ञासा" विषयमा भएको सार्वजनिक सुनुवाई कार्यक्रमपछि एक वर्षदेखि खेतमा बेवारिसे रुपमा रहेका विद्युतका खम्बाहरू विद्युत प्राधिकरण कार्यालयले उठाएर व्यवस्थित गर्ने काम गऱ्यो ।

स्थानीय उपभोक्ताकै लगानीमा सिमेन्टका पोलहरू विद्युत प्राधिकरणले गणेशपुरमा खसालेको थियो । सडकमा रहेका पूराना पोलहरूलाई प्रतिस्थापन गरेर विद्युत प्रसारण लाइनलाई व्यवस्थित गर्न नयाँ सिमेन्टका पोलहरू ल्याइएका थिए । पोलहरू ल्याइए, तर फेर्ने काम भने भएन । पोलले खेत र स्थानीयबासीको घरमा असर पारेको थियो । बारम्बार विद्युत प्राधिकरणमा खबर गर्दा पनि काम बन्न नसकेपछि उनीहरूले रेडियोलाई यसको जानकारी गराए । रेडियो लुम्बिनीले जानकारी पाएपछि समस्या समाधानका लागि स्थानीय समुदायको गुनासोलाई समेटेर विद्युत प्राधिकरण र सरोकारवालाहरूको सहभागितामा एक सार्वजनिक सुनवाई कार्यक्रमको आयोजना गऱ्यो । उक्त कार्यक्रममा विद्युत प्रधिकरणका प्रशाखा प्रमुख अमरप्रसाद जोशीले तत्काल काम पूरा गर्ने सार्वजनिक प्रतिबद्धता व्यक्त गर्नुभयो । सो कुरालाई रेडियोले जस्ताको त्यस्तै प्रसारण गऱ्यो । प्रतिबद्धता अनुसार एकवर्ष सम्म नभएको काम नेपाल विद्युत प्राधिकरणका कर्मचारीले कार्यक्रम प्रसारण भएको एक हप्तामै काम सम्पन्न गरे । उनीहरूले पूराना पोलहरू हटाएर सो स्थानमा खेतमा बेवारिसे रुपमा राखिएका नयाँ पोलहरू राखे ।

नेपाल विद्युत प्राधिकरण समक्ष खेतमा र घरहरूलाई पूराना पोलहरूले अफ्ठयारो पारिरहेको बताउँदै पोल परिवर्तन गर्ने माग स्थानीयबासीले बारम्बार राखे । नेपाल विद्युत प्राधिकरणले बजेट

**"दुई दिन , तीन दिन भन्दै एक वर्ष सम्म पोल सार्ने र फेर्ने काम भएन । रेडियोले कार्यक्रम प्रसारण पछि मात्र विद्युत प्राधिकरणको ध्यान गयो । खेतमा रहेका पोल सडकमा सार्ने र जीर्ण पोल हटाएर नयाँ राख्ने काम भयो"**

अभाव भएको बताउँदै काम गर्न आनाकानी गरिरहेको थियो । समुदायले बजेटको व्यवस्था गरे तत्काल काम गरिदिने आश्वासन विद्युत प्राधिकरणले दियो । समुदायले स्रोत जुटाउने काम गऱ्यो । समुदाय मिलेर उठाएको रकमले नयाँ पोल पनि किनियो । ती खम्बा सडक छेउको खेतमा राखियो । तर, काम सम्पन्न गर्नेतर्फ विद्युत प्राधिकरणले वास्ता गरेन । करिब ७१ हजार रूपैयाँ बराबरको समुदायले खरिद गरेको सामान बेवारिसे हुन थाल्यो । नेपाल विद्युत प्राधिकरण प्रशाखा नयाँमिलको गैरजिम्मेवारीका कारण स्थानीय बासिन्दाले एक वर्षसम्म दुःख झेल्नु पऱ्यो । समुदायले धेरै पटक निवेदन र दबाब दिँदा समेत अलपत्र रहेको काम प्रशाखाले सम्पन्न गर्नेतर्फ चासो देखाएको थिएन ।

समुदायको सक्रियतामा खरिद गरेका पोलहरू एकवर्ष सम्म गणेशपुरको खेतमा बेबारिशे रुपमा रहे । रेडियोमा कार्यक्रम प्रसारण भएपछि ती पोलहरू सडकमा सारिए । अहिले सो स्थानमा भाँचिएका र जीर्ण सबै पोलहरू फेरिएका छन् ।

'दुई दिन, तीन दिन भन्दै एक वर्ष सम्म पोल सार्ने र फेर्ने काम भएन । रेडियोले कार्यक्रम प्रसारण पछि मात्र विद्युत प्राधिकरणको ध्यान गयो । खेतमा रहेका पोल सडकमा सार्ने र जीर्ण पोल हटाएर नयाँ राख्ने काम भयो,' गणेशपुरका स्थानीय बासिन्दा बालकृष्ण पाण्डे भन्नुहुन्छ । अहिले गणेशपुरका बिजुलीका सबै खम्बाहरूमा बत्ती बल्छ । यसरी रेडियोले चासो लिएपछि मात्र सम्बन्धित निकायले जिम्मेवारीको काम पूरा गऱ्यो ।

# नागरिक बडापत्र राखियो

रेडियो लुम्बिनीको कार्यक्रम 'सरोकार'को प्रभावले कपिलबस्तु र रुपन्देही जिल्लाका केहि गाविसमा नागरिक बडापत्र राख्ने काम भएको छ। कपिलबस्तुको लालपुर, पटना र रुपन्देहीको देवदह गाविसमा नागरिक बडापत्र नागरिकले देख्नेगरी राखिएको छ। कपिलबस्तुको बैदौली, रुपन्देहीको मक्रहार र सालझण्डी गाविसले बजेट पहिलो पटक सार्वजनिक स्थानमा टाँस्ने मात्र होइन पत्रिकामा नै छापेर वितरण गर्ने गरेका छन्।

कपिलवस्तुको लालपुर गाविस कार्यालयले बडापत्र राखेपछि त्यहाँका नागरिकलाई गाविसबाट हुने काम, कारबाही र सेवाका बारेमा जानकारी लिन सजिलो भएको छ। उनीहरू कार्यालयबाट समयमै काम सम्पन्न गराउन पाएकोमा दङ्ग छन्। पहिले त कहिले यो पुगेन त कहिले के पुगेन भनेर काम अधुरै छोडेर घर फर्कनु पर्ने थियो।

स्थानीयबासी जन्म दर्ता होस या मृत्यु दर्ता गराउन चाहिने कागजपत्र के के हुन् र कति दिनमा काम हुन्छ भन्ने जानकारी भित्तामा लेखिएको नागरिक बडापत्र हेरेर थाहा पाउँछन्। आफ्नो वा समुदायको काम लिएर गाविस कार्यालय पुग्ने सर्वसाधारण गाविस कार्यालय पुग्दा भित्तामा लेखिएको नागरिक बडापत्र हेरेर मात्र कार्यालयमा प्रवेश गर्छन्। नागरिक बडापत्रले काम लिएर जाने सर्वसाधरणलाई काम सम्पन्न गराउन निकै सजिलो भएको छ।

रेडियो लुम्बिनीले कपिलबस्तुको लालपुर गाविसमा २०६७ साल जेठ ५ गते स्थानीय सुशासनसम्बन्धी नागरिक संवाद कार्यक्रम आयोजना गरी रेडियो कार्यक्रम 'सरोकार' तयार पारि प्रसारण गरेको थियो। गाविसबाट पाइने सेवा, कागजपत्र र समयबारे जानकारी नपाउँदा आफूहरू धेरै पटक गाविस कार्यालय धाउनु परेको भन्दै स्थानीयबासीले कार्यालयको सेवा सेवाग्राहीले सहज रुपमा प्राप्त गर्नुपर्ने माग राखे। कार्यक्रमका सहभागिहरूले छिमेकी गाविसहरूमा जस्तै आफ्नो गाविसमा पनि नागरिक बडापत्र राख्नुपर्नेमा जोड दिए। स्थानिय बासिन्दाको

गुनासो सुनेपछि कार्यक्रमका अध्यक्ष तथा तत्कालिन गाविस सचिव कृष्णकुमार चौधरीले १५ दिन भित्र नागरिक बडापत्र राख्ने सार्वजनिक प्रतिबद्धता व्यक्त गर्नुभयो । २०६७ साल जेठ २० गते सम्म गाविसमा नागरिक बडापत्र राख्ने काम पूरा भयो । अहिले गाविसको बाहिरी भित्तामा सबैले देख्ने गरी नागरिक बडापत्र राखिएको छ ।

यस्तै नागरिक संवाद सञ्चालन भएपछि कपिलवस्तुको पटना, वैदौली तथा रुपन्देहीको सालझन्डी र देवदह गाविसमा पनि नागरिक बडापत्र राख्ने काम भएको छ ।

सालझण्डी गाविस सचिव अग्नी प्रसाद पौडेलका अनुसार रेडियो लुम्बिनीको कार्यक्रम सरोकारले नागरिकका गुनासा सुन्न, थाहा पाउन र त्यसको कार्यान्वययनका लागि काम गर्न प्रेरित गरेको वताउनुभयो । उहाँले भन्नुभयो, 'हामी त समुदायका मानिसहरूका सेवक हौ । काम त हामीले सधै गरेकै हुन्छौ । तर कहिलेकाहिं सेवाग्राहीहरूले आफ्ना सबै समस्या भन्न नसक्ने र हामी कर्मचारीलाई पनि सबै जानकारी नहुने हुँदा व्यावहारिक रुपमा नै समस्या पर्ने रहेछ ।' उहाँले भन्नुभयो, 'हामीसँग सिधै भन्न नसक्नेहरूले पनि कार्यक्रममा भन्दा रहेछन् । यसले हामी नीति कार्यान्वयन गर्ने तहमा बसेकालाई सघाएको छ ।'

**"हामीसँग सिधै भन्न नसक्नेहरूले पनि रेडियो कार्यक्रममा सबै कुरा भन्दा रहेछन् । यसले हामी नीति कार्यान्वयन गर्ने तहमा बसेकालाई सघाएको छ ।"**

स्थानीय समुदायमा सूचना पुऱ्याउँदै नागरिकका कामहरू छिटो छरितो रुपमा सम्पन्न गर्नका लागि सहयोग पुगोस् भन्ने उद्देश्यले रेडियो लुम्बिनीले कार्यक्रम 'सरोकार' निर्माण गरी प्रसारण गर्दै आएको छ । यो कार्यक्रम साप्ताहिक रुपमा हरेक बुधवार बिहान ७ बजे देखि ७.३० बजे सम्म प्रसारण हुन्छ । यो कार्यक्रममा रेडियो लुम्बिनीले स्थानीय नागरिकका पीडा र सरोकारवाला निकायका प्रतिनिधिहरूको प्रतिक्रिया र प्रतिबद्धता प्रस्तुत गर्छ ।

# समयमै सामाजिक सुरक्षा भत्ता

बाग्लुङ एफएमको कार्यक्रम 'सुशासन'का कारण हाल समाजिक सुरक्षा भत्ताहरू समयमा नै वितरण हुन थालेको छ। बाग्लुङका प्रायः गाविस सचिवहरूले सामाजिक सुरक्षा भत्ता र अन्य शिर्षकमा गाविसमा आउने बजेटलाई आफूखुसी आफ्नो व्यक्तिगत खातामा जम्मा गर्थे। आर्थिक वर्षको अन्त्यमा एकै पटक सम्बन्धित शिर्षकमा खर्च गर्ने गरेको व्यहोरा सहितको प्रतिवेदन दिने गरेको विषयमा बाग्लुङ एफएमको ध्यान गयो।

गाविस सचिवहरूको यो कार्यले सेवाग्राही तथा लक्षित वर्गले यो सुविधा ढिलो पाउने वा पाउँदै नपाउने गरेको समेत उदाहरण भेटियो। कार्यक्रम सुशासनको २०६७ पुस २ र ९ गतेको अङ्कमा बाग्लुङ जिल्लाको मल्म र दमेक गाविसका लागि नेपाल सरकारले विनियोजन गरेको सामाजिक सुरक्षा भत्ताको रकम गाविस सचिवहरूको व्यक्तिगत बैंक खातामा जम्मा गरेर अनियमितता गरेको विषयलाई उठायो।

**गाविसमा आएको सामाजिक भत्ताको रकमको विषयमा रेडियोमा कार्यक्रम बज्न थालेपछि समयमा नै गाउँमा नै पुगी वितरण गर्न थालिएको रायडाँडा गाविसका गाविस सचिव तुलसीराम शर्माले बताउनुभयो।**

दमेक गाविसका सचिव यमबहादुर थापा र मल्म गाविसका सचिव वुद्धबहादुर बस्नेतलाई रेडियोमा नै निम्त्याएर संवाद गऱ्यो। यसरी संवादको क्रममा गाविस सचिवद्वयले व्यक्तिगत खातामा बजेट राख्दा दुरुपयोग र अनियमितता भएको स्वीकार नै गरे। यसरी स्वयम् गाविस सचिवहरूले आफूले अनियमितता गरेको स्वीकार गरेपछि कार्यक्रम 'सुशासन'का लागि यो विषयमा जिल्ला विकास समितिका स्थानीय विकास अधिकारी विष्णुबहादुर थापासँग यस बारेमा धारणा माग गर्ने काम गऱ्यो। स्थानीय विकास अधिकारी थापाले यो विषय गम्भीर प्रकृतिको भ्रष्टाचारको कार्य भएकाले तत्काल छानबिन गरी

कारबाही अघि बढाउने जानकारी दिनुभयो ।

यसरी गाविस सचिवले रेडियो संवादमा नै व्यक्तिगत खातामा जम्मा गरेर आर्थिक वर्षको अन्त्यमा मात्र बजेट वितरण गर्ने गरेको विषय र स्थानीय विकास अधिकारीले कारबाही गर्ने बताएको विषयलाई समेटेर 'सुशासन' कार्यक्रममा प्रसारण गऱ्यो । कार्यक्रम प्रसारण भएपछि स्थानीय विकास अधिकारी विष्णुबहादुर थापाले सबै गाविस सचिवको बैठक बोलाई सामुहिक रुपमा लक्षित वर्गको रकम प्राप्त हुनासाथ सम्बन्धित क्षेत्रमा निकासा गरेर खर्च गर्न निर्देशन दिए ।

कार्यक्रम सुशासनका त्यसपछिका अङ्कहरूमा गाविस सचिवहरूले बजेट निकासा हुनासाथ लक्षित वर्गलाई वितरण गरे नगरेको विषयलाई निरन्तर रुपमा प्रसारण गरिरहेको छ । गाविसमा आएको सामाजिक भत्ताको रकमको विषयमा रेडियोमा कार्यक्रम बज्न थालेपछि समयमा नै गाउँमा नै पुगी वितरण गर्न थालिएको रायडाँडा गाविसका गाविस सचिव तुलसीराम शर्माले बताउनुभयो । उहाँका अनुसार यो वर्षको भत्ता जिल्लाभरी नै निर्धारित समयमा नै वितरण गरिसकिएको छ ।

कार्यक्रम सुशासनमा स्थनीय निकायमा हुने ढिलासुस्ती र अनियमितता लगायतका विषयलाई बाग्लुङ एफएमले हप्ताको तीन दिन सोमवार, बुधवार र शुक्रवार सञ्चालन गर्दै आएको छ । यो कार्यक्रममा वाग्लुङ, पर्वत र म्याग्दी जिल्लाका सेवा प्रदायक संस्थामा केन्द्रित भएर कार्यक्रम उत्पादन र प्रसारण गर्ने गरिन्छ । कार्यक्रममा विभिन्न क्षेत्रमा सञ्चालित योजनाको पारदर्शिता र जवाफदेहिताको विषयमा रेडियो संवाद चलाउने गरेको छ । नगरपालिका, जिल्ला विकास समिति र गाउँ विकास समितिले एक आर्थिक वर्षभरि सञ्चालन गरेका कार्ययोजनाका विषयलाई पनि कार्यक्रममा समेटने गरेको छ ।

# गैरकानुनी हुकिङ नियन्त्रण

सिराहा जिल्लाका दक्षिणवर्ती गाविसका ६० प्रतिशतभन्दा बढि स्थानीयबासीले बिजुली मिटर जडान नगरी उपभोग गर्थे । उनीहरू बिद्युत पोलबाट गैरकानुनी रुपमा तारको हुकिङ (तारमा अंकुशे हालेर) बाट घरमा बिजुली लैजान्थे । यसरी गैरकानुनी हुकिङ भइरहेको जानकारी समाद एफएमले प्राप्त गऱ्यो । यो विषयमा समाद एफएमले समाचार र कार्यक्रम निर्माण गरी प्रसारण गरेपछि अहिले बिजुलीको गैरकानुनी हुकिङ गरी चोरी नियन्त्रण गर्ने कार्य रोकिएको छ । उपभोक्ताले घर-घरमा बिजुलीको मिटर जडान गरेका छन् ।

सिराहाको दक्षिणवर्ती क्षेत्रका गाविसहरूमा समाद एफएमले स्थलगत अध्ययनका लागि रेडियोकर्मीलाई खटायो । रेडियोकर्मीले स्थलगत अध्ययनपछि बिजुलीको गैरकानुनी चोरीको विषयमा रेडियो फिचर तयार गरे । रेडियो फिचरमा विद्युत किन चोरी हुन्छ ? चोरी नियन्त्रण गर्ने उपाय के हुन सक्छ भन्ने बारेमा स्थानीय बासिन्दाको भनाईलाई समेटेर २०६७ साल माघ ४ गते रेडियो फिचर प्रसारण गऱ्यो । रेडियोमा फिचर प्रसारण भएपछि सोही फिचरका आधारमा नेपाल विद्युत प्राधिकरण लाहान शाखाका प्रमुख मिथिलेश गोईवारलाई समाद एफएमको नियमित कार्यक्रम 'समय सन्दर्भ' मा बोलाई छलफल चलायो ।

छलफलमा बिजुलीको गैरकानुनी चोरी र हुकिङको कारण र यसको नियन्त्रणका उपायको बारेमा छलफल भयो । छलफलको क्रममा विद्युत प्राधिकरण लाहानका प्रमुख गोईवारले सिरहा जिल्लामा मात्र आर्थिक वर्ष २०६६/०६७ को सुरुको ५ महिनामा विद्युत प्राधिकरण शाखा सिराहाबाट प्रसारण भएका मध्ये १४० वटा ट्रान्समिटर ओभरलोड भएर जलेको कहालीलाग्दो अवस्थाको जानकारी दिनुभयो । विद्युत ट्रान्सफर्मर जलेपछि दर्जनौं गाउँमा महिनौसम्म बत्ती बलेको थिएन । नयाँ ट्रान्सफरमर जडान गर्न कार्यालयसँग पर्याप्त बजेट नभएको उहाँले बताउनुभयो । यसरी ट्रान्सफर्मर जल्नुमा स्थानीय बासिन्दाले विद्युत हुकिङ गरेर बत्ती बाल्ने र सिंचाईको लागि मोटर चलाउने

गरेका कारण भएको निचोड निकालियो । गैरकानुनी हुकिङ चोरीका कारण नै उच्च वा कम भोल्टेजको समस्याले गर्दा विद्युत प्रसारण लाइन अवरोध हुन पुगेको थियो। कार्यक्रम 'समयसन्दर्भ' विद्युत प्राधिकरण लाहानका प्रमुख गोईवारले स्थानीयबासी, राजनीतिक दल, सञ्चारकर्मी र प्रहरी प्रशासनलाई सहयोगको आग्रह गर्दै तत्काल विद्युत चोरी नियन्त्रणको कार्य रोक्ने काम अगाडि बढाउने प्रतिबद्धता सार्वजनिक गर्नुभयो। यसरी रेडियोमा सार्वजनिक अभिव्यक्ति दिएको एक हप्ता भित्र नै प्राधिकरणले लाहानमा स्थानीयबासी, राजनीतिक दल, सञ्चारकर्मी र प्रहरी प्रशासनसँग छलफल कार्यक्रमको आयोजना गऱ्यो । छलफलका अधिकांश सहभागीले बिजुलीको गैरकानुनी चोरी र हुकिङलाई नियन्त्रण गरी मिटर जडान गर्न लगाउनेमा जोड दिए। यसका लागि प्रहरी प्रशासनले पूर्ण सहयोग गर्नुपर्ने विचार राखे। भेलामा तत्काल नेपाल विद्युत प्राधिकरणलाई गाउँमा गएर यो कार्यमा सहयोग गर्न नेपाल प्रहरी र शसस्त्र प्रहरीलाई अनुरोध गर्ने निर्णय गऱ्यो ।

नेपाल प्रहरी र शसस्त्र प्रहरीको सहयोगमा प्राधिकरणको टोली गाउँ पस्यो । यसरी बस्तीमा मिटर जडान नगरी घरमा बिजुली प्रयोग गर्ने सामान र तार सहितका विद्युतिय सामान जफत गर्ने काम सुरु गऱ्यो । खेतबारीमा पानी सिंचाई गर्न प्रयोग भएका मोटरमा हुकिङ्ग गर्नेहरूलाई पक्राउ समेत गऱ्यो । बिजुली बाल्ने भए मिटर जडान गर्न र हुकिङ नगर्नको लागि अनुरोध गरेपछि अधिकांश घरमा मिटर जोड्ने अभियान नै चल्यो । हाल समान्यतया सिराहा जिल्लामा उच्च वा कम भोल्टेजको समस्या देखा पर्न छोडेको छ। ट्रान्सफरमर जल्ने समस्या पनि नियन्त्रण भएको छ। नेपाल विद्युत प्राधिकरणले बिजुलीको चोरी नियन्त्रण पछि मासिक ५० लाख भन्दा बढी आम्दानी हुने गरेको विद्युत प्राधिकरण लाहानका प्रमुख गोईवारले बताउनुभयो। 'चोरी र हुकिङ नियन्त्रण गर्ने हाम्रो नीति भए पनि कार्यान्वयनमा समस्या र समाधानको उपाय खोज्न सकिरहेका थिएनौ । समाद एफएमले घच्घचाएर सबैलाई सहमति जुटाउने कार्यमा सहयोग गरेकाले बिजुलीको गैरकानुनी हुकिङ गरी चोरी नियन्त्रण गर्न सघाउ पुग्यो,' उहाँले भन्नुभयो ।

# कागजी बैठक खारेज

काभ्रेपलाञ्चोक जिल्लाका धेरै गाउँ विकास समितिको गाउँ परिषद्को बैठक स्थानीय दलका प्रतिनिधि र सचिवको मिलोमतोमा सम्पन्न हुने गरेको छ । गाउँ परिषद्का यस्ता अधिकांश बैठकमा नाम मात्रको जनसहभागिता हुने गर्छ । यस्ता बैठक कागजी रुपमा मात्र सम्पन्न हुन्छन् । त्यसमाथि पनि पछिल्लो समयमा यस्ता बैठक सम्बन्धित गाँउमा आयोजना नगरेर सदरमुकाम धुलिखेल र आसपासको सहरी क्षेत्रमा केही दलका प्रतिनिधि आपसमा मिलेर गर्छन् । यस्तै बैठकबाट गाविसको बजेट समेत विनियोजन हुन्छ । यस्तै सिलसिलालाई निरन्तरता दिंदै काभ्रेको च्यासिंखर्क गाविसको गाउँ परिषद्को बैठक दलका प्रतिनिधि र सचिवको मिलोमतामा बनेपामा सम्पन्न भएको खबर रेडियो नमोबुद्धलाई प्राप्त भयो ।

त्यसपछि रेडियो नमोबुद्धले च्यासिंखर्कको गाउँ परिषद् बनेपामा सम्पन्न भयो भनेर २०६७ साल फागुनको दोस्रो हप्तामा समाचार प्रसारण गऱ्यो । यसरी रेडियोले समाचार बजाएपछि जिल्ला विकास समिति काभ्रेले त्यो घटनालाई गम्भीर रुपमा लियो । जिविसले गाउँ परिषद्लाई मान्यता नदिने र पुनः गाउँ परिषद् गाविसमा नै स्थानीय समुदायको सहाभागितामा नगरे कारबाही अगाडि बढाउने निर्देशन नै जारी गऱ्यो । त्यसपछि त कथित गाउँ परिषद्का सहभागिहरू नै गाउँ परिषद् नै नभएको भन्दै हिड्न थाले ।

यहि विषयलाई लिएर रेडियो नमोवुद्धले च्यासिंखर्क गाविसमा २०६७ साल फागुन २० गते एक सार्वजनिक सुनवाई कार्यक्रम नै आयोजना गऱ्यो । उक्त कार्यक्रममा बनेपामा सम्पन्न भएका साधारण सभामा हस्ताक्षर गर्ने एकीकृत माओवादी, नेपाली काँग्रेस, नेकपा-एमालेलगायत अन्य राजनीतिक दलका प्रतिनिधिहरू, समुदायका अगुवा र स्थानीयबासीको सहभागिता रहेको थियो ।

कार्यक्रमको सुरुमा नै गाउँ परिषद् बनेपामा गर्ने कामले आफ्नो अधिकार खोसिएको स्थानीय बासिन्दाले बताए । उनीहरूले स्थानीय

दलका प्रतिनिधिलाई बहिस्कार गर्ने समेत उल्लेख गरे । गाउँ विकास समितिमा महिला, दलित र जनजातिका शिर्षकमा रहेको बजेट सम्बन्धित क्षेत्रमा खर्च गर्नुपर्नेमा स्थानीय बासिन्दाले जोड दिए । यसो नगरे स्थानीय दलका प्रतिनिधिका विरुद्ध आन्दोलनमा उत्रने चेतावनी समेत दिए । स्थानीय बासिन्दाको भनाई सुनेपछि दलका प्रतिनिधिले आफ्नो धारण राख्ने क्रममा कमजोरी भएको स्वीकार गरे । उनीहरूले यस्तो गल्ती नदोहोऱ्याउने प्रतिबद्धता व्यक्त गरे । सार्वजनिक सुनुवाई कार्यक्रममा एक महिनाभित्र गाविस कार्यालयमा नै गाउँ परिषद् गर्ने सहमति जुट्यो । यस अघि बनेपामा भएको गाउँपरिषद्लाई मान्यता नदिई खारेज गर्ने निर्णय भयो ।

यसरी जिल्लामा भेला भएका केही व्यक्तिहरू मिलेर विभिन्न शिर्षकमा बजेट विनियोजन गरेको गाउँ परिषद् बैठक रेडियोले समाचार र कार्यक्रम बनाएर प्रसारण गरेपछि खारेज भयो । एक महिना पछि पुनः गाउँ परिषद् बैठक गाविसमै बस्यो । गाउँ परिषद्ले गाविसका विकास निर्माण लगायतका योजनाहरू पारित गऱ्यो ।

# स्वास्थ्य टोली गाउँमा

२०६६ साल बैशाखको अन्तिम साता । खोटाङको उत्तरी क्षेत्रका ऐंसेलुखर्क र बाकाचोल गाविसमा झाडा पखाला र ज्वरोको महामारीले मानिसहरू बिरामी पर्न थाले । यससम्बन्धी समाचार रुपाकोट सामुदायिक रेडियोले प्रसारण गरेको भोलिपल्टै सो क्षेत्रमा जिल्ला जनस्वास्थ्य कार्यालय खोटाङले औषधी सहितको स्वास्थाकर्मीको टोली पठायो ।

एक हप्तादेखि ती गाउँमा महामारी रुपमा रोग फैलिरहेको थियो । गाउँको स्वास्थ्यचौकीमा अहेव पनि थिएनन् । गाउँलेले स्वास्थ्य चौकीमा स्वास्थ्यकर्मी नभएको जानकारी जिल्ला जनस्वास्थ कार्यालयलाई गराए । तर, जनस्वास्थ्य कार्यालयले स्वास्थ्यकर्मीको टोली पठाउन नसक्ने जानकारी दियो । गाउँलेहरूले राजनीतिल दलका कार्यालयहरू गुहारे । आश्वासन बाहेक केहि पाएनन् । त्यसपछि उक्त टोली रुपाकोट सामुदायिक रेडियोको कार्यालयमा आइपुग्यो । गाउँमा फैलिएको पखाला र ज्वरोको

महामारीले ४ जनाको ज्यान नै गइसकेको जानकारी स्थानीय योगेन्द्र राजभण्डारीले दिनुभयो । सोही जानकारीको आधारमा २०६६ साल जेठ २ गते रेडियोले बेलुका नै यो समाचार प्रसारण गऱ्यो ।

यो समाचार प्रसारण भएको भोलिपल्ट २०६६ साल जेठ ३ गते स्वास्थ्यकर्मी मोहन राउतको नेतृत्वमा त्यसतर्फ टोली पठाउने निर्णय नै गऱ्यो । यसरी गाउँमा रहेका एक अहेवले आफूले उपचार एक्लै गर्न नभ्याएको र आवश्यक मात्रामा औषधीको अभाव रहेको जिल्ला जनस्वास्थ्यलाई जानकारी गराएका थिए । तर, यस विषयमा जनस्वास्थ्य गम्भीर भएन । रेडियोले समाचार प्रसारण गरेपछि टोली पठाएकोमा आश्चर्य व्यक्त गर्दै स्थानीयबासी राजभण्डारीले भन्नुभयो - यति शक्तिशाली पो रहेछ रेडियो र, पो यो समाचार रेडियोलाई देउ भन्दा रहेछन् ।

ऐंसेलुखर्क स्थित प्राथमिक स्वास्थ्य केन्द्रमा एकजना अनमीले मात्रै सेवा दिंदै आएका थिए । तर बाकाचोल उपस्वास्थ्य चौकीमा भने औषधी र स्वास्थ्यकर्मी नै थिएनन् । महामारीले एकपछि अर्को गर्दै मारिएपछि गाउँलेहरूले एक टोली जिल्ला सदरमुकाम दिक्तेल तर्फ पठाएको थियो । उक्त टोलीकै पहलमा अन्ततः स्वास्थ्यकर्मी सहितको टोली गाउँसम्म पुग्यो ।

जनस्वास्थ्यले खटाएको स्वास्थ्यकर्मीको टोलीले महामारी नियन्त्रणमा लिएको विषयमा समाचार प्रसारण गरिदिन जिल्ला जनस्वास्थ्य कार्यालयका प्रमुख सागर प्रसाईले रेडियोलाई अनुरोध नै गर्नुभयो । उक्त टोलीले सदरमुकाम देखि १६ कोष टाढाको बाकाचोल गाविसका ८५ जना र ऐंसेलुखर्कका ६७ जनाको उपचार गरेको थियो । गाउँमा नै अनमी रहेकोले सुरुमा टोली पठाउने कि नपठाउने विषयमा छलफल गर्न समय लागेको हो । तर, रेडियोले मान्छे नै मर्न थालेको समाचार बजाए पछि स्वास्थ्यकर्मीको टोली पठाएर महामारीलाई नियन्त्रणमा लिएको जिल्ला स्वास्थ्य कार्यालय खोटाङका प्रमुख प्रसाईले बताउनुभयो ।

# मल वितरण सम्भव

हरेक वर्ष किसानले बाली लगाउने समयमा काभ्रे जिल्लाको बनेपा, धुलीखेल, पनौती र पाँचखाल लगायतका क्षेत्रमा मलको ठूलै हाहाकार हुने गर्छ । खेती लाउने समयमा किसान खेतबारीमा जानुभन्दा पहिला कृषिमलको जोहो गर्न थाल्छन् । बजार र कृषि कार्यालयमा मल खरिद गर्न किसानको ठूलै भीड जम्मा हुन्छ । सबै किसानको लागि मलको आवश्यकता एकै समयमा पर्छ । खेतमा लगाउको बीउ हुर्के वा समय घर्के पछि लगाएको बाली राम्रो नफल्ने भएकाले किसानलाई समयमै मलको जोहो गर्नुपर्ने हुन्छ । कृषि व्यापारीहरू मौकाको फाइदा लिएर बढि आम्दानी गर्ने सुरमा रहने गर्छन् । उनीहरू कृत्रिम अभाव सिर्जना गरेर बढि मूल्यमा कालो बजारी गरी बिक्री गर्ने ताकमा हुन्छन् । व्यापारीहरूको मिलेमतोमा २०६७ सालमा पनि बजारमा मल आउन कठिन भएको हल्ला जिल्लाभरी फैलाइयो ।

यता काभ्रेपलाञ्चोक जिल्लाको लागि आवश्यक पर्ने मल नियमित रुपमा मगाइएको दाबी कृषि कार्यालयले गराउँदा पनि किसान आश्वस्त हुन सकेनन् । मल अभाव हुने आतङ्कले खेतीबालीको समयमा किसानमा पर्ने मनोवैज्ञानिक त्रासका बारेमा किसानले रेडियोमा आएर गुनासो गर्न थाले । किसानको गुनासो आउन थालेपछि २०६७ साल साउन १५ गते रेडियो नमोबुद्धले किसानले मल नपाएको विषयमा रेडियोमा समाचार प्रसारण गऱ्यो । समाचारमा व्यापरीहरूले मल गोदाममा राखेर किसानलाई मल नदिएको तथ्य समेत खुलायो ।

रेडियो नमोबुद्धले तथ्य सहितको समाचार प्रसारण भएपछि कृषि कार्यालयको पनि सक्रियता बढ्यो । रेडियोले मल लुकाएको भनिएका सम्भावित ठाउँहरूमा निरिक्षण गर्न कृषि कार्यालयले टोली नै खटायो । टोलीले व्यापारीको गोदाममा छापा मार्दा पर्याप्त मल बरामद भयो । २०६७ साउन १६ गतेदेखि नै कृषि कार्यालयले किसानलाई मल निर्वाध रुपमा विक्री वितरण गर्ने सार्वजनिक सूचना प्रसारणका लागि रेडियोलाई

पठायो । सो सूचनामा मल हुँदाहुँदै बिक्रीवितरण नगर्ने व्यापारीको गोदाममा छापा मारेर मल जफत गर्ने उल्लेख गरिएको थियो । यसरी रेडियोबाट सूचना जारी भएपछि व्यापारीले सोही दिनदेखि मल किसानलाई बिक्री वितरण गर्न थाले । त्यसपछि त किसानहरू सानोभन्दा सानो समस्या आयो भने पनि रेडियोमा समाचार भनिदिनु पर्‍यो भन्न थालेका छन् । रेडियोमा गइयो भने हाम्रो समस्या नै समाधान हुन्छ भन्ने विश्वास किसानहरूमा पलाएको छ ।

# आधाघण्टामा नै निर्णय फेरियो

जिल्ला कृषि विकास कार्यालय खोटाङले कार्यालयमा दर्ता गर्न आएका सहकारीबाट व्यवस्थापन खर्च भन्दै नियम विपरित दुई हजार रुपैयाँ लियो । रुपाकोट सामुदायिक रेडियोले यो खबर पाएपछि समाचार प्रसारण गर्‍यो । समाचार प्रसारण भएको आधाघण्टा भित्र नै कृषि कार्यालय आफ्नो निर्णय सच्चाउन बाध्य बन्यो । उसले नियम विपरित लिएको दुई हजार रुपैयाँ फिर्ता लिन आउन सूचना नै जारी गर्‍यो ।

नेपाल सरकारले आर्थिक वर्ष २०६६/६७ मा आम सर्वसाधरण उपभोक्तालाई राहत दिने उद्देश्यले सुपथ मूल्यको पसल खोल्ने नीति लियो । सोही नीति अनुसार उक्त कार्यको लागि सहकारी गठन गर्नुपर्थ्यो । गठन भएका सहकारीलाई सरकारले एक लाख रूपैयाँ अनुदान दिने नीति अख्तियार गर्‍यो । यसको लागि खोटाङको धेरै ठाउँहरूमा सहकारी गठन गरी दर्ता गर्ने अभियान नै चल्यो । धेरै गाउँहरूमा सहकारी निर्माण गरेर आवश्यक कागजातसहित कृषि कार्यालयमा निवेदन दिनुपर्थ्यो । निवेदन दिएपछि जिल्ला कृषि विकास कार्यालयले रकम उपलब्ध गराउँथ्यो ।

गाउँ गाउँमा निर्माण भएका उपभोक्ता सहकारीले दर्ता गरेर सबै प्रक्रिया पूरा गरेपछि कृषि कार्यालयले एक लाख रूपैयाँ वितरण गर्ने कार्यक्रम राख्यो र सबै उपभोक्ता सहकारीलाई एक लाख रूपैयाँ अनुदान दिने निर्णय भयो । तर, उक्त निर्णय कार्यान्वयन हुँदा भने

**रेडियोमा समाचार बजेपछि कृषि कार्यालयका कर्मचारी जम्मा भएर छलफल गरेरअनियमित रूपमा लिएको रकम तत्काल सम्बन्धित सहकारीलाई फिर्ता गर्ने तत्कालै निर्णय नै**

अनौठो दृश्य देखियो । दर्जनौ उपभोक्ता सहकारीलाई ९८ हजार रुपैयाँ मात्र दिइयो । एक सहकारीसँग २ प्रतिशत अथवा दुई हजारका दरले व्यवस्थापन खर्च भन्दै लिने काम भयो । तर यसरी रकम कटौती गरेको रसिद उपभोक्ता सहकारीलाई दिईएन । २०६६ साल चैत २५ गते दर्जनौ उपभोक्ता सहकारीले जिल्ला कृषि विकास कार्यालयबाट ९८ हजारको दरले रकम बुझ्े । खोटाङ जिल्लामा जिल्ला कृषि विकास कार्यालयले यसरी रकम वितरण गरेको समाचार रेडियोबाट प्रसारण गरिदिन उपभोक्ता सहकारीका प्रतिनिधहरूले अनुरोध गरे । रेडियोकर्मीको टोली यस विषयमा समाचार तयार गर्न कृषि कार्यालय गयो । कृषि कर्यालयमा रेडियोकर्मीले उपभोक्ताले पाउनुपर्ने रकम कटौती गरेको देखेर चकित परे । रेडियकर्मी जिल्ला कृषि विकास कार्यालयमा पुग्दा केही उपभोक्ता सहकारीका प्रतिनिधिहरूले यसरी कटौती गरेको रकमको रसिद दिन अनुरोध गरिरहेका थिए । सरकारी नीति नियममा उल्लेख नभएको भएपनि कार्यालयले कार्यालय व्यवस्थापनका लागि भन्दै प्रत्येक सहकारीबाट दुई हजार रूपैयाँका दरले रकम लिने गरेको पाइयो ।

यस्तो दृश्य देखेपछि सोही दिन २०६६ साल चैत २५ गते रुपाकोट सामुदायिक रेडियोले कृषि विकास कार्यालयले सरकारी नीति विपरित २ हजार रूपैयाँ लिने गरेको विषयमा समाचार तयार गरी प्रसारण गऱ्यो । यो समाचार बेलुकी ४.०० बजेको गाउँ ठाउँको खबरमा प्राथामिकताका साथ प्रसारण भयो । रेडियोमा समाचार बजेपछि कृषि कार्यालयका कर्मचारी जम्मा भएर छलफल गरे । उनीहरूले यसरी लिएको रकम तत्काल सम्बन्धित उपभोक्ता सहकारीलाई फिर्ता गर्ने तत्कालै निर्णय नै गरे ।

यसरी समाचार प्रसारण भएको आधा घण्टा लगत्तै जिल्ला कृषि विकास कार्यालयका प्रमुख हरेन्द्र श्रीवास्तवले बेलुकी ४.४० मा

रुपाकोट सामुदायिक रेडियोको कार्यालयमा फोन गरेर उपभोक्ता सहकारीहरूबाट कार्यालय व्यवस्थापन खर्च भनि कटाइएको रकम फिर्ता लिन आउने बारे सूचना टिपाई सूचना प्रसारण गरिदिन अनुरोध गरे । समाचार बजेको आधा घण्टा पछि नै जिल्ला कृषि विकास कार्यालयले निर्णय रद्द गरेको विषयको सूचना सशुल्क प्रसारण गऱ्यो । यसरी रुपाकोट सामुदायिक रेडियोको समाचार र सूचना पछि पहिल्यै अनुदान लिइसकेका उपभोक्ता सहकारीलाई दुई हजार रकम फिर्ता गर्ने काम भयो । रकम नलिएका बाँकी सहकारीहरूले भने पुरै एक लाख रकम नै प्राप्त गरे ।

# रेडियोकर्मीको सामु नै नागरिकता

जिल्ला प्रशासन कार्यालय सिराहाले नागरिकता, पासपोर्टलगायत अन्य सेवामा आम नागरिकहरूलाई कर्मचारीले दुःख दिने गर्थे । कार्यालयबाट दिइने सेवा छिटो छरितो नभएको गुनासो सर्वसाधारणको हुने गर्थ्यो । यस्तो गुनासो लिएर सर्वसाधारण बारम्बार रेडियो कार्यालयमा आउने गर्थे । यसरी गुनासो आउन थालेपछि समाद एफएमले २०६७ साल पुस ८ गते केही सर्वसाधारणको भनाईलाई समावेश गरेर एक स्थलगत रेडियो रिपोर्ट प्रसारण गऱ्यो । समाचार प्रति तत्काल जिल्ला प्रशासन कार्यालय सिराहाले आपत्ति जनायो । प्रशासनले समाचार खण्डन गर्न धेरै पटक फोन मार्फत दबाब दियो । दिनहुँ जसो जिल्ला प्रशासन कार्यालयको अगाडि जम्मा भएका नागरिकहरूसँग बसेर अर्को रिपोर्ट तयार गर्ने र त्यसमा सबै सेवाग्रहीहरू जिल्ला प्रशासनको सेवा प्रति सन्तुष्ट रहेको धारणा पाइए त्यसलाई पनि जस्ताको तस्तै रेडियो रिपोर्ट तयार गरि प्रसारण गर्ने मौखिक सहमति प्रशासन र रेडियोबीच भयो ।

सहमति अनुसार समाद एफएमले प्राविधिक सहितको ३ जनाको समूहलाई खटायो । रेडियोकर्मीहरूको समूहले जिल्ला प्रशासन कार्यालयको अगाडि बसिरहेका सयौं मान्छेको भिडमा कुराकानी गर्न थाल्यो । सिराहा जिल्ला प्रशासन कार्यालय अगाडि करिब पाँच सय

जना मानिसहरूको भीड सधैं रहन्छ । त्यही भीडको बीचमा चिकना-६का एक ७५ वर्षिय वृद्ध सोनफी गोइत भेटिए । ७५ वर्षीय वृद्ध गोइत आफ्नो छोरा सुनिलकुमार गोइतको नागरिकता बनाउन प्रशासन धाउन थालेको १५ दिन भइसकेको थियो । विभिन्न कारण देखाउँदै आफूलाई खाली हात नै फर्काउने गरेको गुनासो उनले गरे । ती वृद्धले छोराको नागरिकता बनाउन चाहिने सबै कागजात पुऱ्याउँदा पनि जिल्ला प्रशासन कार्यालयबाट नागरिकता बनाउन नसकेको कुरा रेडियोकर्मी सामु राखे । उनीहरूले आफूसँग भएका सबै प्रमाणित गर्ने कागजात गाउँ विकास समितिले जारी गरेको जन्मदर्ताको प्रमाणपत्र, विद्यालयको उतीर्ण गरेको शैक्षिक प्रमाणपत्र हातैमा बोकेका थिए । त्यहाँ भएका सबैलाई देखाउँथे । सबै नागरिकता बनिहाल्छ भन्दा रहेछन् । तर, नागरिकता फाँटका कर्मचारीले छोरा भर्खर १७ वर्ष मात्र पुगेको भन्दै फिर्ता गरिदिने गरेको ती वृद्धले बताए ।

रेडियोकर्मीको समूहले त्यही विषयमा रेडियो रिपोर्ट तयार गऱ्यो । आवश्यक कागजातमा २१ वर्ष पुगेको उल्लेख भएपनि फाँटवालाले १७ वर्षको भनी नागरिकता नदिएर १५ दिन देखि एक वृद्धले दुःख पाएको विषयमा प्रतिक्रिया लिन प्रशासकिय अधिकृत जयनारायण यादव समक्ष पुग्यो । सुरुमा यो विषयलाई उनले विश्वास नै गरेनन् । उनले प्रतिक्रिया दिन आनाकानी गरे । रेडियोकर्मीले पीडित पक्षलाई लिएर कार्यकक्षमा भेट गरायो । सबै कागजात देखायो । प्रशासकिय अधिकृतले सबै कागजात हेरे । कागजातमा सबै कानुनी प्रक्रिया पूरा भएको थियो । उनले त्यसपछि सोही दिन रेडियोकर्मीका सामुन्ने सुनिलकुमार गोइतको नागरिकतामा हस्ताक्षर गरिदिए र सुनिलकुमार गोइतले त्यहि दिन नागरिकता समेत पाए । यसरी फाँटवाला र लेखनदासहरूका कारण सेवाग्राहीलाई परेको मर्कामा सुधार गर्ने प्रशासकिय अधिकृत यादवले बताए । यो सबै विषयलाई २०६७ साल पुस १२ गते रेडियोले रिपोर्ट तयार गरि प्रसारण गऱ्यो ।

'फाँटवाला र लेखनदासहरूले आफूसँग पैसा लिनको लागि दुःख दिए । रेडियोका कारण नै मेरो छोराको नागरिकता बन्यो,' ७५ वर्षिय वृद्ध सोनफी गोइतले खुशी हुँदै भने ।

# पार्वती घरमै पुर्नस्थापित

रुपन्देही जिल्लाको सिक्टहन गाविसकी पार्वती गुप्ता पारिवारिक घरेलु हिंसाबाट पीडित थिइन् । उनले घरेलु हिंसा सहन सकिनन् । घर छोडेर निस्किन । आफन्तको घरमा शरण लिएर बसिन् । रेडियो लुम्बिनीले सिक्टहन गाविसमा आयोजना गरेको छलफल कार्यक्रममा पार्वतीलाई पनि सहभागि गरायो । पार्वतीले छलफल कार्यक्रममा उनले आफ्नो जीवनका घटना, भोगेका पीडा र घर छोडेर बस्नु परेको बाध्यताको कारुणिक वेदना सुनाइन् । उनले आफूले न्याय पाउन नसकेको गुनासो पोखिन । उनले पीडा पोखेपछि कार्यक्रम सहजकर्ताले न्याय खोज्ने विधिको बारेमा उनलाई जानकारी दिए ।

यी सबै विषयलाई समेटेर रेडियोले कार्यक्रम निर्माण गरी प्रसारण गऱ्यो । रेडियोले आफ्ना समस्या प्रसारण गरेपछि पार्वतीलाई न्याय खोज्न उत्साहित बनायो । उनी न्यायको खोजीमा भौतारिन थालिन् । उनले स्थानीय सामाजिक अगुवा सरिता चौधरीलाई सम्पर्क गरिन् । सरिताको सहयोगमा घर परिवारसँग समस्या समाधानको लागि छलफल गर्न सहमत भइन । चौधरीले सहजिकरणका लागि पार्वतीको घरमा सम्पर्क गरिन । पीडकले विगतमा गरेका गल्ती स्वीकार गरी पीडितलाई अब पीडा नदिने बताए । रेडियोले सहजिकरण भइरहेको वेला पार्वतीको बारेमा कार्यक्रम प्रसारण गऱ्यो । रेडियोमा घरेलु हिंसाको कानुनी उपचार र दण्डको बारेमा कार्यक्रममा चर्चा गरेको थियो । रेडियोमा कार्यक्रम बजेपछि गाउँमा यसको विषयमा चर्चा परिचर्चा हुन थाल्यो । चारैतिर यसको चर्चा हुन थालेपछि पार्वतीको परिवार उनलाई घरेलु हिंसा नगर्ने सर्तमा पुर्नस्थापित गर्न तयार भयो । तीन महिनासम्म घरछोडेकी पार्वती घर परिवारले हिंसा नगर्ने सर्तमा घर फर्कन तयार भइन् ।

पार्वती मात्र होइन कयौं महिलाहरू पारिवारिक हिंसाको सिकार हुन्छन् । उनीहरू आफ्नो समस्या लुकाएर पीडा सहेर बस्नाले थप पीडित हुने गर्छन् । रेडियो लुम्बिनीले आफ्नो प्रसारण क्षेत्रका तीन जिल्लाका ३० वटा गाविसमा सञ्चालन गरेको छलफल कार्यक्रम पछि

महिलाहरूले आफ्ना समस्यालाई सार्वजनिक रुपमा नै पोख्न थालेका छन् । उनीहरूले कार्यक्रममा न्यायिक उपचारको प्रक्रियाका बारेमा थाहा पाउँछन् । न्यायिक उपचारका लागि सम्बन्धित निकायमा उजुरी समेत दिन थालेका छन् ।

यसरी रेडियो लुम्बिनीले ३० गाविसमा कार्यक्रम निर्माण गरी महिला अधिकार र घरेलु हिंसाबारे सम्बन्धित सरोकारवाला र नागरिकलाई जानकारी गरायो । महिलाले भोगका समस्या र पीडालाई सार्वजनिक बहसमा ल्याएपछि यस्तो अवस्था आएको हो । यो कार्यक्रममा लैङ्गिक समानता र समता, जातिय विभेद, समाजमा विद्यमान परम्परागत गलत मान्यता, कानुन र संविधानमा उल्लेख गरिएका महिला अधिकारका कुरा, हिंसामा परेमा उजुरी गर्ने तरिका र न्यायको लागि अपनाउनु पर्ने विधिहरूका बारेमा अधिकारकर्मी तथा कानुन व्यवसायीको सहजिकरणले सम्भव भएको हो । रुपन्देही, कपिलबस्तु र पाल्पाका ३० वटा गाविसमा रेडियो लुम्बिनीले आयोजना गरेको महिला अधिकारसम्बन्धी अन्तर्क्रियामा यस्ता घटना विवरण सङ्कलन गर्ने काम समेत गरेको थियो ।

महिलाहरूको गोपनियता र थप हिंसा नहोस् भनेर रेडियो लुम्बिनीले कार्यक्रममा सङ्कलन भएका सबै सूचनालाई प्रसारण नगरी प्रतिनिधिमूलक घटनाहरूलाई मात्र रेडियोमा प्रसारण गऱ्यो । यस्ता कार्यक्रमले महिला हिंसा रोक्न र सामाजिक विसङ्गती अन्त्यमा महत्वपुर्ण र सकारात्मक सन्देश दिन थालेको छ । यस्ता विषयलाई समेटेर महिला अधिकारकाका लागि सहयोग पुग्ने गरी समाचार र रेडियो रिपोर्ट बनाएर रेडियोमा प्रसारण हुन्छ । रेडियो लुम्बिनीको मंगलवार प्रसारण हुने साप्ताहिक महिला सम्बन्धी कार्यक्रम ‘परिवेश’मा महिला सम्बन्धी विषय र छलफलमा उठेका सत्य घटना विवरण सहितका सवालहरूलाई उठाइन्छ । यसका बारेमा रेडियोले सम्बन्धित निकायमा पहल र पैरवी समेत गर्ने गर्छ ।

# उपचार सम्भव

खोटाङ घितुङ्ग गाविस-४ कात्तिकेका परशुराम लिम्बु मृगौला रोगले थलिए। उनको पारिवारिक अवस्था कमजोर थियो। उपचार गर्न असम्भव जस्तै भयो। लिम्बुको मृगौला प्रत्यारोपण गर्नुपर्ने चिकित्सकले बताए। रुपाकोट सामदायिक रेडियोले उपचार खर्चको अभावमा उपचार हुन नसकेको जानकारी पायो। रेडियोले निःशुल्क सूचना प्रसारण गरेर सहयोग गर्ने निर्णय गऱ्यो।

२०६४ साल बैशाख १ गतेदेखि प्रसारण सुरु गरेको रेडियोले पहिलो पटक निःशुल्क सूचना प्रसारण गऱ्यो। रेडियोले 'तपाईंको सानो सहयोगले मानिसले जीवन दान पाउन सक्छ' भन्ने सन्देश सहितको सूचना प्रसारण गरी सहयोग गर्न अनुरोध गऱ्यो। यो सूचनाले लिम्बुको मृगौला प्रत्यारोपण गर्नमा सहयोग पुग्यो। रेडियो खोटाङ उद्योग वाणिज्य सङ्घको बैंक खातामा रकम जम्मा गर्न आग्रह गऱ्यो। भौचर रुपाकोट सामुदायिक रेडियोको कार्यालयमा बुझाउन समेत अनुरोध गऱ्यो। सूचनामा रकम सिधै दिन चाहनेले खोटाङ उद्योग वाणिज्य सङ्घको कार्यालयमा गएर बुझाउन सकिने समेत उल्लेख थियो। उनको मृगौला उपचारका लागि जिल्लामा योभन्दा पहिला आर्थिक सहयोग सङ्कलनको लागि समिति निर्माण भएको थियो। तर त्यो प्रभावकारी हुन सकेन। समितिमा जिल्लामा क्रियाशील सबै राजनीतिक दलहरूको प्रतिनिधित्व रहेको नेकपा एमालेका तत्कालिन पार्टी सचिव विशाल भट्टराईले बताउनुभयो।

**'रेडियो मेन्छ्यायेमले मलाई ठूलो गुन लगाएको छ। मलाई बचाउन सहयोग गरेकोमा मैले रेडियोलाई केहि दिन नसके पनि धन्यवाद दिन्छु।'**

आर्थिक सहयोग गर्ने व्यक्तिको नाम रेडियोमा प्रसारण हुन थाल्यो। यसले अरुलाई पनि सहयोग गर्न प्रेरित गऱ्यो। खोटाङ सदरमुकामदेखि पूर्व ६ घण्टा पैदल हिडेर पुगिने छोरम्बु गाविसबाट स्थानीय महिला दिदीबहिनीहरू रकम नै जम्मा गर्न भनी दिक्तेल आए। पैसा बैंकमा जम्मा गर्न सदरमुकाम जान नभ्याउने भन्दै सहयोग रकम बैंकमा जम्मा गरिदिन

गाउँका धेरै दिदीबहिनीहरूले आफूलाई रकम पठाएको असल शासन परियोजनाका सहसंयोजक प्रमिला राईको भनाई छ । खोटाङ जिल्लाका कर्मचारी, शिक्षक, विद्यार्थी तथा सर्वसाधरण सबैले परशुराम लिम्बुलाई सहयोग गरी बचाएको धितुङ गाविस स्थित बुलापन्थे माविका प्रधानाध्यापक सर्वधन लिम्बुले बताउनुभयो । 'सर्वसाधरणसम्म सूचना पऱ्याउने काम रेडियोले नै गऱ्यो । नत्र यो सम्भव थिएन,' लिम्बुले भन्नुभयो । मृत्युको मुखमा पुगेको बेला सहयोगका लागि नागरिकलाई सूचित गरी सहयोग रकम जम्मा गर्न सघाएकोमा रेडियो र सर्वसाधारणलाई परशुराम लिम्बुले सार्वजनिक रुपमा धन्यवाद दिनुभयो ।

धितुङ गाविस वडा नं ४ मा जन्मेका लिम्बु मृगौला रोगबाट ग्रसित हुनुपूर्व विद्यार्थी राजनीतिमा सक्रिय हुनुहुन्थ्यो । उहाँ अहिले आफ्नै गाउँको प्राथामिक विद्यालयका शिक्षक हुनुहुन्छ । भारतको बैंगलोरमा उपचार पछि हाल आफ्नो स्वास्थ्य राम्रो रहेको लिम्बुले जानकारी दिनुभयो ।

यस्तै अर्को घटनामा पनि रेडियो उपचार सहयोगको माध्यम बनेको छ । खोटाङको दुर्छिम गाविस वडा नं ६ का भर्तबहादुर राईको माइली छारी कोपिला राई र माइला छोरा सुवास राई दुवैमा मुटु रोगको समस्या देखा पऱ्यो । उपचारका लागि राईले आफ्ना छोराछारीलाई काठमाडौं लिनुभयो । काठमाडौंमा भएको स्वास्थ्य परिक्षण पछि अप्रेशन नै गर्नुपर्ने शहिद गंगालाल हृदयरोग केन्द्र बाँसबारीले जनायो । उपचारका लागि लाखौं रकमको जोहो राईले गर्नुपर्ने भयो । आर्थिक अवस्था कमजोर भएकाले रकम जुटाउन गाह्रो हुने भयो । २०६५ साल चैत ४ गते राई रुपाकोट सामुदायिक रेडियोमा आई सहयोग गरिदिन लिखित रुपमा अनुरोध गर्नुभयो ।

सहयोगका लागि रुपाकोट सामुदायिक रेडियोले निःशुल्क रुपमा सूचना तयार पारी प्रसारण गऱ्यो । खोटाङ उद्योग वाणिज्य सङ्घको बैंक खातामा रकम जम्मा गरि भौचर रेडियोमा बुझाउन आग्रह गरियो । सूचना प्रसारण भएपछि रकम बैंकमा जम्मा हुन थाल्यो । विदेशमा रहेका नेपालीले पनि उपचारका लागि सहयोग गरे । बैंकमा लाखौ रकम जम्मा भएपछि मुटु पीडित दुबैजनाको उपचार भयो ।

रुपाकोट रेडियोले अभिभावकको रुपमा उपचारका लागि सहयोग गरेको उपचार पछि सामान्य जीवन बिताइ रहेकी कोपिला राईले भन्नुभयो । बाक्सिलाका मृगौला रोग पीडित डिकमान पाखीन भन्नुहुन्छ, 'रुपाकोट रेडियोमा सूचना नबभ्काई सहयोग माग्न जाँदा मानिसले उल्टै हप्कार पठाए ।' गाँउलेले सूचना नबभ्काई सहयोग माग्दा नपत्याएकोले पछि रेडियोबाट सूचना प्रसारण भएपछि बोलाएर सहयोग रकम दिएको उहाँले बताउनुभयो ।

यस्ता मुटु, मृगौला तथा अन्य रोगले पीडित मानिसका लागि आर्थिक सहयोग जुटाउने माध्यम बनेको छ रेडियो । कसैको उपचारका लागि सहयोग जुटाउनु परेमा रेडियोलाई सुरुमा खबर गर्ने परम्परा नै बसिसकेको छ । रेडियोबाट प्रसारण हुने सूचनालाई मानिसले विश्वास गर्ने भएकाले आपतविपतमा सहयोग गर्ने माध्यम बनेको छ रेडियो ।

# रेडियोकै कारणले उपचार

तेह्रथुम सोल्मा गाविस-६ का ३५ वर्षिय बेगबहादुर लिम्बुलाई रेडियोको बारेमा खासै जानकारी थिएन् । उनले जिल्लामा रेडियो खुलेका छ भनेर सुनेका मात्र थिए । औपचारिक शिक्षा अध्ययन नगरेका लिम्बुको आर्थिक अवस्था कमजोर थियो । उनले काम गर्न विदेशिने निधो गरे । यसका लागि गाउँमा ऋण लिएर केही रकम जम्मा गरे र कामको खोजिमा विदेश हानिए । कामको खोजीमा विदेश हानिएका लिम्बु दुई वर्ष उतै बसे । विदेश पठाएको म्यानपावर कम्पनीसँग सम्भ्कौता अनुसार उनले काम पाएनन् । दुई वर्षको बसाईमा पैसा कमाउन नसकेपछि उनी रित्तो हात घर फर्किन बाध्य भए ।

घर फर्किने क्रममा २०६७ साल भाद्र १० गते काठमाडौं स्थित एक होटलमा बास बसे । रातको समयमा सोही होटलको छतबाट लडेर उनी गम्भीर घाइते भए । उपचारका लागि उनलाई त्रिवि शिक्षण अस्पताल महाराजगञ्ज काठमाडौंमा भर्ना गरियो । अग्लो होटलको छतबाट लडेर उनको देब्रे गोडा क्षतविक्षत भएकाले खट्टा काट्नु

पऱ्यो । देब्रे खुट्टाको शल्यक्रिया गर्नुपर्ने भयो । उपचार गर्न धेरै पैसा लाग्ने भयो । उपचारका लागि पैसा नहुँदा उनी मृत्युसँग लडिरहेका थिए । उनी आकस्मिक दुर्घटनामा परी घाइते भएको खबर उनको घरमा आयो । छोराको अवस्था थाहा पाएर बावुआमा छाँगाबाट खसेजस्तै भए । उनीहरूले रेडियोबाट सहयोगका लागि सूचना प्रसारण हुने गरेको सुनेका रहेछन् । सहयोग पाउने आशमा बेगबहादुरकी आमा रेडियो मेन्छ्यायेममा आएर सहयोगका लागि अनुरोध गरिन । रेडियोले उपचारका लागि सहयोग रकम जुटाउन निःशुल्क रुपमा २०६७ साल कात्तिक २० गतेदेखि निरन्तर १५ दिन सम्म सूचना प्रसारण गऱ्यो । यो सूचना प्रसारण भएपछि सहयोग गर्ने मानिसहरूको ओइरो लाग्न थाल्यो । रेडियो र बेग बहादुर उपचार सहयोग समितिका अध्यक्ष र सचिवको मोवाइलमा जिल्ला भित्र र जिल्ला बाहिरका मानिसहरूले सहयोगका लागि सम्पर्क गरे । उपचार कोषमा उपचारका लागि चाहिने पर्याप्त रकम जम्मा भयो । उनको उपचार त्यो रकमले सम्भव भयो ।

उपचारपछि बेग बहादुर लिम्बुको सकुशल हुनु भएको छ । दुर्घट्नमा एउटा खुट्टा गुमाएका लिम्बुले बैसाखी टेक्दै रेडियोमा आएर भन्नुभयो "रेडियो मेन्छ्यायेमले मलाई ठूलो गुन लगाएको छ । मलाई बचाउन सहयोग गरेकोमा मैले रेडियोलाई केहि दिन नसके पनि धन्यवाद दिन्छु" ।

"हाम्रो आर्थिक अवस्था कमजोर थियो । घरबाट मात्र पैसा निकालेर उपचार गर्न गाह्रो थियो । सबैको सहयोगले आफ्नो छोराको उपचार सम्भव भयो," बेग बहादुरका बुबा पदमबहादुर लिम्बुको भनाई थियो । उहाँले भन्नुभयो, "रेडियोमा गीत र समाचार बजेको सुनेको थिए तर यसरी पैसा उठाउन सहयोग गरेर दुःखी गरिब जनताको पक्षमा समेत बोल्ने काम गर्दो रहेछ ।" रेडियोबाट सूचना प्रसारण भए पछि सबै गाँउलेहरूले रेडियोले भनेकाले सहयोग गर्नुपर्छ भनेर आर्थिक सहयोग जुटाउन मद्दत पुगेको उपचार सहयोग समितिका संयोजक छत्रबहादुर लिम्बुले बताउनु भयो । अहिले बेग बहादुर लिम्बु उपचारकै क्रममा सुनसरीको ईटहरीमा बस्दै आउनु भएको छ ।

# महिला पत्रिका वितरक

देवी शर्मा २३ वर्षकी भइन् । उनको जन्म पर्वतको बेनीमा भयो । उनी सानै छँदा बुबाले अर्की आमा ल्याए । उनी र उनकी आमालाई त्यसै अलपत्र छोडे । आमाछोरीले अर्काको घरमा शरण लिनुपर्‍यो । सुरुमा पर्वत बेनीकै सानीमा (आमाको बहिनी)को घरमा शरण लिएर बसे । सुरुका दिनमा त्यहि बसेर देवीले स्कूल पढ्न थालिन् । तर लामो समयसम्म अर्काको घरमा बसेर पढ्ने वातावरण उनलाई मिलेन । उनी सानीमाको घरबाट निस्किन बाध्य भइन । उनको आर्थिक अवस्था कमजोर थियो । उनले पढाइलाई पूर्णविराम दिइन । जागिरका लागि भौतारिन थालिन् । उच्चशिक्षा हासिल नगरेकी देवीलाई जागिर पाउन कहाँ सजिलो थियो र ?

रोजगारी खोज्दा खोज्दा हैरान भएका आमाछोरी अवसरको खोजीमा बाग्लुङ आए । जेनतन आमाछोरीले जीवन गुजारा गर्न गिटी कुट्न थाले । गिटी कुट्दै देवीले पुनः पढाइलाई निरन्तरता दिइन । काम खोज्ने क्रममा बाग्लुङबाटै प्रकाशित हुने मुक्तिक्षेत्र दैनिकको वितरकको रुपमा उनले काम गर्ने अवसर पाइन् । पत्रिका वितरकको कामबाट आउने धेरथोर पारिश्रमिकले उनलाई खर्च धान्न केही सजिलो भयो । पत्रिका वितरणसँगै अध्ययनलाई पनि उनले निरन्तरता दिएकी छिन् । उनी बाग्लुङकै धौलागिरी बहुमुखी क्याम्पसमा प्रविणता प्रमाणपत्रतह दोश्रो वर्षमा अध्ययनरत छिन् । पत्रिका वितरणको पेशामा प्रायः पुरुषकै वर्चस्व छ । उनले लगनशिल र मिहेनतका साथ कामलाई अगाडि बढाइन । उनी अञ्चलकै पहिलो महिला वितरकको रुपमा परिचित भइन । जीवनयापन समेत यहि पेशाबाट गरिरहेकी छिन् । देवीले काम भन्ने सानो ठूलो नहुने कुराको उदाहरण दिएकी छिन् । महिलाले पनि हरेक पेशामा पुरुष सरह काम गर्न सक्ने देखाएकी छिन् ।

सामुदायिक रेडियो बाग्लुङ एफएमले आफ्नो समाचार उत्पादन कार्यक्रम हाम्रो खबरको हरेक मंगलबार प्रसारण गर्ने साप्ताहिक स्तम्भ धौलागिरीका नमूनामा २०६७ साल कात्तिक ९ गते उनको

बारेमा रेडियो रिपोर्ट तयार गरी प्रसारण गऱ्यो । रिपोर्टमा उनले भोग्नु परेका पीडा, सङ्घर्ष र भोगाइका बारेमा जानकारी दिने काम भयो । यो स्तम्भमा रेडियोले समाजमा फरक काम गरेर उदाहरणिय र प्रेरणादायी व्यक्तिकहरूको भोगाई, अनुभव र सङ्घर्षका बारेमा जानकारी दिने गरिन्छ ।

उनको भोगाई र सङ्घर्षलाई सुनेर धेरैलाई प्रेरित बनायो । त्यसरी प्रेरित हुने मध्येकी दिक्षिता थापामगरले पनि सोही मुक्तिक्षेत्र दैनिकमा पत्रिका वितरकको रुपमा काम थालेकी छिन् । “देवी दिदीको बारेमा रेडियोमा सुनेपछि मैले पनि पत्रिका बाँडने काम सुरु गरे ” दिक्षिता थापामगरले भनिन् । दिक्षिताले बागलुङ एफएमबाट २०६८ जेठ ४ गते प्रशारित रेडियो समाचार कथामा आफू देवीको प्रेरणाबाट पत्रिका बाँडने काम सुरु गरेको बताएकी थिईन । देवीकै प्रेरणाबाट धौलागिरी जागरण दैनिकमा म्याग्दी रत्नेचौरकी तुलना थापाले पत्रिका बाँडने पत्रिका वितरकको काम थालेकी छिन् । अहिले बाग्लुङबाट प्रकाशित हुने दैनिक तथा साप्ताहिक पत्रिकामा महिला पत्रिका वितरकको सङ्ख्या बढ्न थालेको छ । देवी शर्मा, दिक्षिता थापामगर र तुलना थापाले महिलाहरूलाई यस पेशाप्रति प्रेरित गर्ने कामको श्रेय सामुदायिक रेडियो बागलुङ एफएमलाई दिने गरेका छन् ।

देवी अहिले पनि सोही मुक्ति क्षेत्र दैनिकमा पत्रिका वितरणको काम गर्छिन । “बाग्लुङ एफएममा मेरो परिश्रम र मेहनतका बारेमा समाचार प्रसारण भयो । यसले मजस्ता अन्य साथीहरूलाई पनि यो क्षेत्रमा काम गर्न अझ हौसला र प्रेरणा मिलेको छ ।” उनले भनिन् ।

# भाषिक र साँस्कृतिक जागरण

रुपाकोट सामुदायिक रेडियोमा विभिन्न भाषाभाषीसम्बन्धी कार्यक्रम प्रसारण हुन्छ । यस्ता कार्यक्रमहरू स्थानीय आदिवासी जनजातिको भाषा, संस्कृति संरक्षणका विषयमा केन्द्रित हुन्छन् । यस्ता कार्यक्रम र समाचारको प्रसारणले खोटाङ जिल्लामा स्थानीय समुदायलाई आफ्नो भाषा र संस्कृति संरक्षण गर्न जागरुक बनाएको छ । उनीहरू आफ्नो भाषा र संस्कृति संरक्षण गर्न रेडियोमा स्वयम्सेवी रुपमा काम गर्छन् । आफ्नो भाषा र संस्कृतिसम्बन्धी कार्यक्रम उत्पादन गर्छन् । रेडियो कार्यक्रम उत्पादन गर्ने खर्च पनि आफै जुटाउँछन् । यसले रेडियोलाई आत्मनिर्भर बनाउन सहयोग पुगेको छ ।

सुरुमा रुपाकोट सामुदायिक रेडियोले चाम्लिङ भाषाका समाचार तथा कार्यक्रम उत्पादन र प्रसारणको लागि २०६५ साल पुस १२ गते एक भेलाको आयोजना गऱ्यो । भेलाको उद्देश्य चाम्लिङ भाषाको समाचार र कार्यक्रमको लागि अनुगमन तथा प्रबर्द्धन समिति निर्माण गर्नु थियो । भेलाका सहभागीले चाम्लिङ भाषा र संस्कृतिको संरक्षणका लागि सहयोग गर्न आफूहरू तयार भएको बताए । भेलाले जसराज राईको संयोजकत्वमा चाम्लिङ भाषाको कार्यक्रम अनुगमन तथा प्रबर्द्धन समिति निर्माण गऱ्यो । रेडियोमा चाम्लिङ भाषामा प्रसारण हुने कार्यक्रमका लागि विषयवस्तु जानकारी दिन र कार्यक्रमको दिगो व्यवस्थापनका लागि स्रोत खोज्नेमा भेला सहमत भयो । यसरी भाषा र संस्कृतिको संरक्षणमा स्थानीय समुदायलाई सँगै लग्ने रेडियोको प्रयासले सार्थकता पायो ।

२०६५ साल पुस १४ गते समितिको पहिलो बैठक बस्यो । बैठकले कार्यक्रमको अनुगमनसँगै भाषा र संस्कृतिको संरक्षण गर्ने साझा मञ्चका रुपमा विकास गर्ने निर्णय गऱ्यो । सो समिति चाम्लिङला खाम्बातिमकोमा परिवर्तन भई भाषा र संस्कृति संरक्षणको काम सुरु गरेको छ । समितिले रेडियोमा प्रसारण हुने भाषिक समाचार तथा कार्यक्रमको लागि विषयको टुङ्गो लगाउँछ । कार्यक्रम प्रस्तोताको छनोट गर्छ । रेडियो कार्यक्रमका लागि संगठित भएको समितिले चाम्लिङ

राई समुदायबारे पुस्तक तथा वृत्तचित्र निर्माण गर्ने कार्यलाई पनि अगाडि बढाउन निर्णय समेत गरेको संयोजक जसराज राईले जानकारी दिनुभयो । विभिन्न विचारमा विभाजित चाम्लिङ राईहरूलाई भाषा र संस्कृति संरक्षण गर्न रेडियोले सघाएको चाम्लिङ भाषाको कार्यक्रम अनुगमन तथा प्रबर्द्धन समितिका संयोजक जसराज राईले बताउनुभयो ।

रेडियोका लागि चाम्लिङ राईहरूले कार्यक्रमको नाम नै इमोदिम इमोछाम भन्ने राखे । चाम्लिङ भाषामा नियमित रुपमा साप्ताहिक रुपमा समाचार र कार्यक्रम प्रसारण भइरहेको छ । यो कार्यक्रम नियमित रुपमा प्रसारण हुन थालेपछि चाम्लिङ भाषाको विकास र प्रयोगमा सुधार आएको छ । कार्यक्रमले भाषा संस्कृतिको संरक्षण गर्नका लागि किराँत राईहरूको उद्यौली, उभौली र साकेला पर्वहरूमा चाम्लिङ भाषाका गीतहरू गाउनुपर्ने मान्यता नै स्थापित भएको छ । त्यसैगरी मौलिक भेषभूषाको प्रयोगमा पनि चेतना वृद्धि भएको छ । सामान्यतया विहे वा पितृ कार्यमा मात्र प्रयोग हुने गरेको भाषा बोलीचालीमा प्रयोग हुनुमा रेडियोको ठूलो योगदान रहेको स्थानीय खाम्वातिमका सदस्य पर्खनबहादुर राईले बताउनुभयो ।

**रेडियो कार्यक्रमले गर्दा भाषा संस्कृतिको संरक्षण गर्नका लागि किराँत राईहरूको उद्यौली, उभौली र साकेला पर्वहरूमा चाम्लिङ भाषाका गीतहरू गाउनुपर्ने मान्यता नै स्थापित भएको छ भने मौलिक भेषभूषाको प्रयोगमा पनि बढेको छ ।**

त्यस्तै रुपाकोट सामुदायिक रेडियोले नेपाल भाषा(नेवारी)मा समाचार र कार्यक्रम प्रसारण सुरु गऱ्यो । रेडियोले नेपाल भाषाको समाचार र कार्यक्रम अनुगमन तथा प्रबर्द्धन समिति समेत बनायो । कार्यक्रमको मूल्याङ्कनका लागि समिक्षा बैठकहरू बसे । उक्त समितिले २०६६ साल वैशाख ६ गते स्थानीय सरस्वती उच्च माविको सभाहलमा नेवार समुदायको भेला वोलायो ।। उक्त भेलाले जिल्लामा पहिलो पटक नेवार समुदायको साझा संस्था नेवा खलः गठन भयो । यसका लागि रेडियोको उक्त समितिले काम

गऱ्यो । नेवा खलः खोटाङको प्रारम्भिक कार्यक्रमको थालनी रुपाकोट सामुदायिक रेडियोले गऱ्यो । दिक्तेल-३ बस्ने नेवा खलःका तत्कालिन सचिव ईन्द्र कसजुले रुपाकोट सामुदायिक रेडियोको अभियानले नेवा खलः गठन भएको बताउनुभयो । नेवा खलःको संयोजनमा दिक्तेल बजारमा ऐतिहासिक लाखे महोत्सव समेत हुन थालेको छ ।

**समुदायलाई नै रेडियोमा कार्यक्रम उत्पादन गर्ने काम जिम्मा दिएकाले भाषा संस्कृतिको संरक्षणसागै रेडियोप्रति उनीहरूको अपनत्व पनि बढेको छ । सामुदायिक सहकार्यको भावना विकास गरेको छ । सामुदायिक रेडियोलाई समुदायमुखी बनाउन समुदायको सहकार्यले ईटा थप्ने काम गरेको छ ।**

२०६६ साल जेठमा बसेको नेवा खलःको बैठकले खोटाङ जिल्लामा पहिलो चोटी लाखे जात्राको आयोजना गर्ने निर्णय गऱ्यो । २०६६ साउन १७ गते जिल्लामा पहिलो पटक लाखे महोत्सव सम्पन्न भयो । खोटाङ जिल्लाको ११ स्थानबाट लाखे नाचसँग सम्बन्धित रोपाईजात्रा, नेवारी गीत, लाठी नाँच, भेषभूषासहित ऱ्याली प्रदर्शन जस्ता कार्यक्रमहरू सम्पन्न हुने गरेका छन् । नेवार समुदायले पनि साप्ताहिक रुपमा नेपाल भाषा सिकाई सहितको आधा घण्टाको कार्यक्रम उत्पादन गर्छन् । साप्ताहिक रुपमा १५ मिनेटको नेपाल भाषामा समाचार समेत नियमित रुपमा प्रसारण हुँदै आएको छ । यस बाहेक दुमी राई र तामाङ थुलङ लगायतका समुदायले पनि आफ्नो भाषामा नियमित रुपमा कार्यक्रम उत्पादन र प्रसारण गर्दै आएको छन् । यसरी कार्यक्रम उत्पादन गर्न लाग्ने सम्पूर्ण खर्च सम्बन्धित समुदायले नै व्यहोर्छ ।

समुदायलाई नै रेडियोमा कार्यक्रम उत्पादन गर्ने काम जिम्मा दिएकाले भाषा संस्कृतिको संरक्षणसँगै रेडियोप्रति उनीहरूको अपनत्व पनि बढेको छ । सामुदायिक सहकार्यको भावना विकास गरेको छ । सामुदायिक रेडियोलाई समुदायमुखी बनाउन समुदायको सहकार्यले ईटा थप्ने काम गरेको छ ।

# भाषाका स्वयम्सेवक

रेडियो मेन्छ्यायेमले प्रसारण सुरु गरेदेखि नै स्थानीय स्तरमा बोलिने राष्ट्रिय भाषाभाषीको संरक्षण गर्ने नीति लियो। भाषिक र प्राविधिक ज्ञान भएका जनशक्ति खोजी यस्ता कार्यक्रम उत्पादन गर्नु चुनौती नै थियो। रेडियोले आदिवासी जनजाति समुदायको बारेमा 'आदिवासी अधिकार' कार्यक्रम सञ्चालन गर्ने निर्णय गऱ्यो। कार्यक्रम उत्पादनका लागि विषय, स्रोत र जनशक्ति खोज्न थाल्यो।

रेडियोले २०६६ साल वैशाखदेखि साउन महिनासम्म तेह्रथुम जिल्लाको विभिन्न क्षेत्रमा रहेका समुदायसँग छलफल गर्ने कामको थालनी गऱ्यो। रेडियोले समुदायलाई कार्यक्रमको उद्देश्य र यसले समुदायमा पुग्ने फाइदाको बारेमा जानकारी दिन थाल्यो। रेडियोले लिम्बु, मगर, शेर्पा, भुजेल लगायतका समुदायबीच पुगेर रेडियो कार्यक्रमबारे जानकारी गरायो। समुदाय बीच भएको छलफलका विषयलाई सम्पादन गरी रेडियो कार्यक्रममा समेत प्रसारण गरिने जानकारी रेडियोकर्मीले दिए।

आदिवासी अधिकार कार्यक्रम बारे जानकारी गराउने क्रममा रेडियोले स्थानीय भाषा, संस्कृति र कला, सीप र ज्ञानको संरक्षणको लागि समय छुट्याएको जानकारी दियो। तर आवश्यक जनशक्ति नभएकाले उत्पादन गर्न नसकेको पनि बताइयो। रेडियोमा आफ्नै भाषामा कार्यक्रम बजाउन पाइने, भाषा र संस्कृतिको चर्चा पनि हुने थाहा पाएपछि मगर र शेर्पा समुदायका केही अगुवा उत्साहित भए। उनीहरूको उत्साहलाई थप हौस्याउने काम रेडियोले गऱ्यो। रेडियो मेन्छ्यायेमका कार्यक्रम उत्पादन प्रमुख मनु याक्थुङबाले रेडियोले स्थानीय भाषाहरू लिम्बु, शेर्पा, मगर, तामाङ, नेपाल भाषा र गुरुङ लगायतका भाषामा कार्यक्रम उत्पादन प्रसारण गर्ने नीति तय भएकाले ती समुदायका मानिसलाई कार्यक्रम उत्पादनका लागि तयार हुन आग्रह गरे। शेर्पा र मगर समुदायले कार्यक्रम उत्पादनको तयारी गर्ने आश्वासन दिए। शेर्पा र मगर समुदायले आफ्नो जातीय संगठनमार्फत

रेडियो कार्यक्रम उत्पादन प्रसारणको पहल नै सुरु गरे । मगर समुदायको जातीय संगठन नेपाल मगर सङ्घ जिल्ला शाखा तेह्रथुमले रेडियो कार्यक्रमका लागि क्रमशः नविन रानामगर, चन्चला केप्छाकि मगर र कृष्णकुमारी रानामगरलाई कार्यक्रम उत्पादन टोलीमा छनोट गऱ्यो । रेडियो कार्यक्रम उत्पादन टिमका सहभागीलाई रेडियोले कार्यक्रम उत्पादन प्रविधिसम्बन्धी जानकारी गरायो । उनीहरूलाई रेडियो प्रविधि, स्क्रिप्ट लेखन, शब्द चयन, कार्यक्रम प्रस्तुती शैली र रेडियोक नीति नियमको बारेमा अभिमुखिकरण गरायो ।

कार्यक्रम उत्पादन टिमका रेडियोकर्मीले स्टुडियोमा रेकर्डिङको अभ्यास समेत गरे । रेडियो प्रविधिबारे जानकारी भएपछि मगर भाषाका कार्यक्रम सञ्चालकलाई कार्यक्रम उत्पादनको आत्मविश्वास पलायो । उनीहरूले २०६६ भदौ १३ गतेबाट कार्यक्रम उत्पादन गर्न सुरु गरे । रेडियो मेन्छ्यायेमबाट पहिलो स्थानीय भाषामा मगरभाषाको कार्यक्रम 'कानुङ ढुट ल्होरोस' साप्ताहिक रुपमा प्रसारण हुन थाल्यो । यो कार्यक्रम हाल पनि नियमित रुपमा प्रसारण भइरहेको छ । मगरभाषाको कार्यक्रम 'कानुङ ढुट ल्होरोस' को उत्पादन प्रसारणमा लाग्ने सम्पुर्ण खर्च नेपाल मगर सङ्घले नै व्यहोर्ने गरेको छ ।

स्थानीय भाषा संस्कृतिको संरक्षण गर्ने नीति अनुरुप कार्यक्रम प्रसारण समय रेडियोले निःशुल्क उपलब्ध गराएको छ । मगर समुदायले आफ्नै भाषामा रेडियो कार्यक्रम प्रसारण गरिरहेका छन् । रेडियो मेन्छ्यायेमबाट मगर भाषामा कार्यक्रम र समाचार प्रसारण हुन थालेपछि अन्य समुदायले पनि आफ्नो भाषा संस्कृतिको जगेर्ना गर्न कार्यक्रम उत्पादन गर्ने जाँगर देखाए । अहिले रेडियोमा शेर्पा, नेपाल भाषामा साप्ताहिक रुपमा आधा घण्टा र लिम्बु भाषामा दैनिक दुईपटक समाचार वुलेटिन र आधा घण्टा कार्यक्रम प्रसारण हुँदै आएको छ । यसरी साप्ताहिक रुपमा करिब पाँचघण्टा भन्दा बढी समय समुदायका संस्थागत स्वयम्सेवाबाट कार्यक्रम सञ्चालन भइरहेका छ । यसमा लाग्ने सम्पूर्ण खर्च तीनै संस्थाहरूले ब्यहोर्ने गरेका छन् ।

**स्थानीय भाषा संस्कृतिको संरक्षण गर्ने नीति अनुरूप कार्यक्रम प्रसारण समय रेडियोले निःशुल्क उपलब्ध गराएको छ ।**

# कार्यक्रम उत्पादनमा स्वयम्सेवक

रेडियो स्वर्गद्वारी एफएम दाङले विभिन्न पेशाका विशेषज्ञलाई आफ्नो विज्ञता र रुचीको विषयमा स्वयम्सेवी रुपमा कार्यक्रम सञ्चालन गराउन थालेपछि रेडियोको कार्यक्रममा विविधता थपेको छ । रेडियोलाई चाहिने जनशक्ति स्वयम्सेवी रुपमा तयार भएका छन् । रेडियोको कार्यक्रममा गुणस्तरता थपेको छ । रेडियोको आर्थिक भार केहि हदसम्म भए पनि कम भएको छ । श्रोताले कार्यक्रममा नयाँ स्वाद पाएका छन् । रेडियो र समुदायको सम्बन्ध नजिक बनाएको छ ।

रेडियो स्वर्गद्वारी एफएम दाङमा स्वयम्सेवी विज्ञहरूबाट साप्ताहिक नौ वटा भन्दा बढि कार्यक्रमहरू सञ्चालन भइरहेका छन् । रेडियोले स्वयम्सेवीलाई प्राविधिक रुपमा कार्यक्रम उत्पादनमा सघाउँछ । यस्ता कार्यक्रम सञ्चालकहरूको मूल पेशा अर्कै छ । तर उनीहरू समाजमा आफ्नो पहिचान बनाउन तथा आफ्नो विज्ञताको ज्ञान र अनुभव साटासाट गर्न कार्यक्रम सञ्चालन गरिरहेका छन् । स्वयम्सेवीका रुपमा काम गर्ने विज्ञ र नागरिकहरूसँगको सहकार्यमा सञ्चालित यस्ता कार्यक्रमहरू स्थानीय समुदाय माझ पनि निकै लोकप्रिय रहेका छन् । यसरी कार्यक्रम उत्पादन गर्न थालेपछि रेडियोको मासिक खर्चमा बचत हुन पुगेको छ । स्थानीय विज्ञ व्यक्तिबाट प्राप्त यस्तो सहयोगले रेडियोलाई आत्मनिर्भर बन्न मद्दत गरेको छ ।

**स्वयम्सेवीका रूपमा काम गर्ने विज्ञ र नागरिकहरूसागको सहकार्यमा सञ्चालित यस्ता कार्यक्रमहरू स्थानीय समुदाय माझ पनि निकै लोकप्रिय रहेका छन् । यसरी कार्यक्रम उत्पादन गर्न थालेपछि रेडियोको मासिक खर्चमा बचत हुन पुगेको छ । स्थानीय विज्ञ व्यक्तिबाट प्राप्त यस्तो सहयोगले रेडियोलाई आत्मनिर्भर बन्न मद्दत गरेको छ ।**

**स्वयम्सेवी रूपमा सञ्चालित अर्को कार्यक्रम हो "ईङलिस बाई रेडियो" हो, यो कार्यक्रमको सञ्चालन शिक्षक रामहरी रिजालले गर्नुहुन्छ । साप्ताहिक रूपमा प्रसारण हुने कार्यक्रम अंग्रेजी भाषा सिक्न, बोल्न र बुझ्न चाहनेका लागि निकै उपयोगी छ । विद्यार्थीहरू माझ यो कार्यक्रम लोकप्रिय रहेको छ ।**

रेडियो स्वर्गद्वारीमा विगत लामो समयदेखि धार्मिक कार्यक्रम सञ्चालक रुपमा मदन शर्मा क्रियाशीन हुनुहुन्छ । उहाँको मुख्य पेशा शिक्षण हो । उहाँले पद्मोदय पब्लिक उमावि भरतपुर दाङमा शिक्षकको रुपमा कार्यरत हुनुहुन्छ । नेपाल संस्कृत विश्वविद्यालय बेलझुण्डि दाङकी प्राध्यापक सरस्वती पोखरेलले पनि उक्त धार्मिक कार्यक्रम सञ्चालन गर्नुहुन्छ । दुवै कार्यक्रम प्रस्तोताको प्रस्तुती, ज्ञान र अनुभव कार्यक्रमलाई निकै लोकप्रिय बनाएको छ । यसरी स्वयम्सेवी रुपमा सञ्चालित अर्को कार्यक्रम हो 'ईङलिस बाई रेडियो' हो, यो कार्यक्रमको सञ्चालन शिक्षक रामहरी रिजालले गर्नुहुन्छ । साप्ताहिक रुपमा प्रसारण हुने कार्यक्रम अंग्रेजी भाषा सिक्न, बोल्न र बुझ्न चाहनेका लागि निकै उपयोगी छ । विद्यार्थीहरू माझ यो कार्यक्रम लोकप्रिय रहेको छ । हिन्दु विद्यापिठ घोराहीमा कार्यरत भोलानाथ योगीले दैनिक रुपमा, शिक्षण जनकल्याण मावि दुधरास, दाङमा कार्यरत किशोरचन्द्र गौतम र विद्यानिलकण्ठ उमाविमा कार्यरत पुष्पप्रकाश ज्ञवालीले ज्ञानका विषयमा रेडियो प्रवचन दिने गर्नुहुन्छ । दैनिक रुपमा प्रस्तुत हुने यो कार्यक्रममा ज्ञानका नयाँ आयामका बारेमा चर्चा गरिन्छ । रेडियोको लोकप्रिय कार्यक्रममा यो पर्छ ।

दाङ सिएमए क्याम्पसमा कार्यरत चेतनाथ धिताल साप्ताहिक रुपमा सांगीतिक कार्यक्रम प्रस्तुत गर्नुहुन्छ भने बस व्यवसायी समितिमा कार्यरत लोकराज पराजुलीले रेडियो स्वर्गद्वारीमा हास्य व्यङ्ग्य कार्यक्रम प्रस्तुत गर्नुहुन्छ । यो कार्यक्रमले स्रोतालाई निकै मनोरञ्जन प्रदान गरेको छ । महेन्द्र बहुमुखी क्याम्पस दाङमा कार्यरत डा कृष्णराज

डिसीले साहित्य, संस्कृति र शिक्षासम्बन्धी कार्यक्रम सञ्चालन गरिरहनु भएको छ । यस्ता कार्यक्रमको उत्पादनले एकातिर रेडियोलाई उत्पादन गर्नुपर्ने कार्यक्रमको बोझ घटाएका छन् भने अर्कातिर रेडियोमा आफ्नो रुचीको कार्यक्रम प्रस्तुत गर्न चाहनेलाई मौका प्रदान गरेको छ ।

यसैगरी जिल्ला विकास समिति दाङ र घोराई नगरपालिकाले पनि रेडियो स्वर्गद्वारीबाट १५/१५ मिनेटको कार्यक्रम उत्पादन र प्रसारण गर्ने गरेका छन् । कार्यक्रम उत्पादनका लागि रेडियोले प्राविधिक र प्रसारण समय उपलब्ध गराउने गरेको छ । कार्यक्रमको विषय छनोटदेखि कार्यक्रम उत्पादनका सबै काम सम्बन्धित कार्यालयले नै गर्ने गरेका छन् ।

# स्वयम्सेवी प्राविधिक

ज्ञान र सीपको प्रयोग जति गर्‍यो त्यति नै निखार आउँछ । ज्ञान र सीपको अधिकतम प्रयोग सबैका लागि फाइदाजनक हुन्छ । यस्तो ज्ञान र सीप भएका मानिस संस्थाको रक्तसञ्चारको माध्यम नै हुन्छन् । रेडियो मेन्छ्यायेमका लागि यस्तै रक्तसञ्चारको माध्यम बनेका छन् ध्रुव राई । उनमा भएको कम्प्युटर प्राविधिक ज्ञान र सीपले रेडियो मेन्छ्यायेमको प्राविधिक काममा निकै सघाउ पुगेको छ । उनले रेडियोको कम्प्युटर मर्मत स्वयम्सेवी रुपमा गर्ने गरेका छन् ।

पत्रकारितामा स्नातक गरेका राई खोटाङबाट तेह्रथुम रोजगारीका लागि आएका हुन् । करिब ५ वर्ष अगाडिदेखि ग्रामीण पहुँच कार्यक्रम र्‍याप टु का मेनेजरका रुपमा तेह्रथुममा कार्यरत छन् । उनी कार्यालयको काममा मात्र सिमित भएनन् । कम्प्युटर हार्डवेयर र सफ्टवेयर दुवैको राम्रो ज्ञान भएका राई रेडियोको सम्पर्कमा आइपुगे । त्यसरी सम्पर्कमा आएका राई २०६५ साल चैतदेखि हालसम्म रेडियोका लागि नभइ नहुने अभिन्न अङ्ग भएका छन् ।

रेडियोलाई सिमित सामाग्रीमा रहेर कार्यक्रम तयार गरी प्रसारण गर्नुपर्ने वाध्यता थियो । रेडियोमा कार्यरत कर्मचारीसँग प्राविधिक ज्ञान कम थियो । यसले रेडियो सञ्चालनमा चुनौती खडा गरेको थियो ।

**कम्प्युटर हार्डवेयर र सँटवेयर दुवैको राम्रो ज्ञान भएका ध्रुब राई रेडियो मेन्छ्यायेमको सम्पर्कमा आइपछि रेडियोलाई धेरै सजिलो भएको छ । स्वयम्सेवक राईकै रेडियोको प्राविधिक समस्या कम हुँदै गएको छ भने रेडियोकर्मीको प्राविधिक सीप र क्षमता वृद्धि भएको छ ।**

उपकरणहरूको नियमित परिक्षण गर्ने क्रममा कम्प्युटरमा समस्या आइरहन्थ्यो । कम्प्युटरमा आउने समस्याहरू समाधान गर्ने स्रोत व्यक्तिको रेडियोलाई आवश्यकता थियो । रेडियोमा कार्यरत कर्मचारीलाई कम्प्युटर मर्मत गर्ने ज्ञान थिएन । बाहिरबाट कम्प्युटर मर्मत गर्ने विज्ञ झिकाउनुपर्थ्यो । बाहिरबाट स्रोत व्यक्ति वोलाएपछि एक पटकमा कम्तीमा १ हजार ५ सय देखि २ हजार रकम तिर्नुपर्थ्यो । सामान्य प्रविधिको समेत जानकारी रेडियोकर्मी र कर्मचारीलाई नहुँदा यो समस्या झनै चर्को रुपमा थियो । महिनामा पाँच देखि सात पटकसम्म कम्प्युटर मर्मत गर्ने स्रोत व्यक्ति झिकाउँदा रेडियो आजित भइसकेको थियो ।

त्यस्तो समयमा ध्रुव राईसँग कम्प्युटर प्राविधिक ज्ञान क्षमता भएकाले रेडियोले सहयोगका लागि अनुरोध गर्ने काम गऱ्यो । रेडियोको अनुरोधलाई स्वीकार गरेर उहाँले सहयोग गर्न थाल्नुभयो । उहाँले स्वयम्सेवी रुपमा रेडियोमा रहेका कम्प्युटर मर्मत गर्ने जानकारी गराउनुभयो । कम्प्युटर प्रविधि, सञ्चालन र मर्मतका बारेमा रेडियोकर्मी र कर्मचारीलाई उहाँले जानकारी गराउनुभयो । यसले महिनौ पिच्छे मर्मत गर्नुपर्ने कम्प्युटर वार्षिक बढिमा दुई पटक मात्र मर्मत गर्नुपर्ने अवस्था सिर्जना भएको छ। रेडियो मेन्छ्यायेममा हाल सात थान कम्प्युटर रहेका छन् । तेह्रथुम बजारमा हाल एउटा कम्प्युटर एकपटक खोलेर मर्मत गरेवापत न्यूनतम आठसय रुपैया लिने गर्छन् । रेडियोमा रहेका कम्प्युटरहरू मासिक रुपमा एक पटक मात्र परीक्षण गर्ने हो भने पनि साढे पाँचहजार रुपैया पारिश्रमिकमा खर्च लाग्थ्यो । अहिले रेडियोमा देखिने सामान्य कम्प्युटर प्रविधिको मर्मत रेडियोकर्मी र कर्मचारी

आफै गर्न सक्ने भएका छन् । राईकै सहयोगले रेडियोको प्राविधिक समस्या कम हुँदै गएको छ । रेडियोकर्मीको प्राविधिक सीप र क्षमता वृद्धि भएको छ ।

वार्षिक दुई पटक कम्प्युटरको सर्भिसका लागि बजारमा उपलब्ध श्रोत व्यक्तिलाई ल्याएमा करिब ११ हजार रुपैयाँ पारिश्रमिकमा खर्च हुन पुग्छ । तर ध्रुव राईको स्वयम्सेवाले रेडियोको खर्च जोगिनुका साथै प्राविधिक समानहरू बिग्रिनबाट जोगिएको छ । राईले विगत तीन वर्षदेखि रेडियोलाई यो सेवा निरन्तर दिइरहेका छन् । उनले तेह्रथुमबासीलाई सूचना प्रविधिबारे जानकारी गराउन २०६६ माघदेखि यससँग सम्बन्धित १५ मिनेटको कार्यक्रम पाक्षिक रुपमा सञ्चालन गरिरहेका छन् । यो कार्यक्रम पनि उनले स्वयम्सेवी रुपमै सञ्चालन गरिरहेका छन् । यसरी राईको सहयोगले रेडियोलाई प्राविधिक क्षमतायुक्त बनाएको छ ।

# जरिवानाको पैसा रेडियोलाई

धुम्रपान र मद्यपान स्वास्थ्यका लागि हानिकारक छ । तर यसको सेवन गर्नेको सङ्ख्या भने दिनहुँ बढ्दै छ । खोटाङको दिक्तेल बजार र आसपासका क्षेत्रमा पनि धुम्रपान र मद्यपान गर्ने मानिसहरूको सङ्ख्या ठूलै छ । विशेष गरी साँझको समयमा मद्यपान सेवन गर्ने मानिसको होहल्लाले बजार आसपासको क्षेत्रमा विकृति समेत फैलाउने गरेको छ । होहल्ला गर्ने मानिसलाई गाउँलेले सम्झाई बुझाई घर फर्काउने गर्छन् । धेरै पटक सम्झाउँदा पनि नमान्ने र सामाजिक विकृति फैलाउने घटना दोहोरिरहन्छन् । यस्ता घटनाको दोषीलाई कारबाही गर्न उजुरी प्रहरीसम्म पुग्ने गर्छ । जिल्ला प्रहरी कार्यालय खोटाङमा ल्याइएका दोषीलाई अब त्यस्तो कार्य नगर्ने कबुलियत नामामा सहिछाप गराई जरिवाना लिएर छोडिन्छ । यसरी लिएको जरिवनाको रकम जिल्ला प्रहरी कार्यालय खोटाङले रुपाकोट सामुदायिक रेडियोलाई उपलब्ध गराइरहेको छ ।

जिल्ला प्रहरी कार्यालय खोटाङ र रुपाकोट सामुदायिक रेडियोबीच सामाजिक सहकार्यमा सहमति भएको छ । जिल्ला प्रहरी कार्यालयका मानिसहरूको जीउधन सम्बन्धीत लोक कल्याणकारी सूचनाहरू, प्रहरीमा उजुरी दर्ता भएका सामाग्री हराएको वा मानिस बेपत्ता भएका घटनामा प्रहरीको अनुरोधमा रेडियोले निःशुल्क सूचना प्रसारण गर्छ । प्रहरीले धम्रपान र मद्यपानको उजुरी घटनामा लिएको सम्पूर्ण जरिवानको रकम रुपाकोट सामूदायिक रेडियोलाई उपलब्ध गराउँछ ।

त्यस्तै खोटाङ जिल्लाको सदरमुकाम दिक्तेलमा धुले कच्ची बाटो पुगेपछि मालबाहक ट्रक र यात्रुबसहरू सञ्चालनमा आए । व्यवस्थित सडक र बस बिसौनीको अभावमा दैनिक जसो सडक दुर्घट्ना हुन थाले । ट्राफिक नियमको उल्लङ्घन हुन थाल्यो । यसरी नियम उल्लङ्घन गर्ने यातायात व्यवसायी र मजदुरसँग ट्राफिक प्रहरीले जरिवाना लिने गर्छ । जरिवानको रकम ट्राफिक प्रहरीले रेडियोलाई उपलब्ध गराउँछ । रेडियोले यसबापत आम समुदायलाई सडक दुर्घट्ना रोक्न सचेत गराउने रेडियो जिङल जिल्ला ट्राफिक कार्यालयको सहकार्यमा तयार

गरी प्रसारण गर्छ। यस्तो सहमति र सहकार्यको थालनी जिल्ला ट्राफिक कार्यालय र रुपाकोट सामुदायिक रेडियो बीच भएको छ।

२०६७ साल भदौ ५गते जिल्ला प्रहरी कार्यालयका तत्कालिन प्रहरी नायब उपरिक्षक टेकबहादुर तामाङ र रुपाकोट सामुदायिक रेडियोका स्टेशन व्यवस्थापक टङ्क थापाले दुबै पक्ष बीचको सहकार्यको सम्झौता पत्रमा हस्ताक्षर गरेपछि यो सम्भव भएको हो। यसरी जम्मा भएको दुवै निकायको रकम रुपाकोट सामुदायिक रेडियोको बैंकको खातामा जम्मा हुन्छ। २०६८ भदौ १५ गते सम्म बैंक खातामा १५ हजार रुपैया धुम्रपान मद्यपान र ७ हजार रुपैयाँ सडक नियम उल्लङ्घन बापतको जरिवाना रकम गरी २२ हजार रुपैयाँ बैंकमा दाखिला भएको छ। यसरी सामाजिक हितको निम्ति जुन विषयको सन्देश बनाइन्छ त्यसको उल्लङ्घन गर्नेहरूबाट नै दण्ड जरिवानाको रकम असुलेर रेडियोलाई प्रदान गर्ने प्रचलन नै बसेको छ।

यसरी जिल्ला प्रहरीले बेला बेलामा विभिन्न सामाजिक सन्देशको सूचना प्रसारण गर्नुपर्ने हुन्छ। यस्तो सन्देश प्रसारण गर्न प्रहरी कार्यालयम बजेट हुँदैन। यस्तो अवस्थामा रेडियो र प्रहरीबीच सामाजिक हितका लागि भएको सहकार्यले शान्ति सुरक्षा कायम गरी सामाजिक सद्भाव कायम राख्न मद्दत पुगेको जिल्ला प्रहरी कार्यालयले जनाएको छ।

# आफ्नै भाषा र स्वरमा शुभकामना

धार्मिक पर्वका अवसरमा रेडियोबाट शुभकामना दिन चाहने सर्वसाधारणको भीड नै लाग्छ। सर्वसाधारणलाई आर्थिक व्ययभार नपर्ने र रेडियोका लागि स्रोत पनि सङ्कलन हुने नयाँ शैलीको थालनी सुरु गऱ्यो समाद एफएमले यो वर्ष। परम्परागत रुपमा सहरी क्षेत्रका पैसा हुने व्यक्तिहरूले शुभकामना वापत रकम तिरेर आफ्नो सन्देश रेडियोबाट प्रसारण गर्ने गरेका थिए। तर २०६८ सालको विजया दशमी, दीपावली तथा छठ पर्वको अवसरमा ग्रामीण भेगका मानिसहरूले उनीहरूकै आवाजमा रेडियोबाट सन्देश प्रसारण गर्ने सूचना जारी गऱ्यो। यसरी शुभकामना दिनेले नगद रकमको साटो धान र चामल दिन सकिने

व्यवस्था मिलायो। रेडियोबाट आफ्नै आवाजमा सन्देश दिन पाउँदा ग्रामीण क्षेत्रका मानिसहरूलाई निकै हर्षित तुल्याओ। यो कार्यले रेडियोलाई निकै लोकप्रिय बनायो। समुदायका मानिसहरूसँग रेडियोको सम्बन्ध मजबुत बनाउनमा यो कार्यले थप मद्दत गरेको छ। सिरहा जिल्लाबाट काठमाडौँमा बसोवास गर्दै आएका मानिसहरूबाट २०६८ साल असोज ८ र ९ गते आफ्नै आवाजमा ५० जनाले शुभकामना दिए। शुभकामना वापत रेडियोले ३० हजार रूपैयाँ उठाएको थियो।

२०६८ साल असोज १३ देखि कात्तिक ४ गते सम्ममा समाद एफएमको प्रसारण क्षेत्र लाहान बजारका सरकारी कार्यालयहरू र समाद एफएम सुनिने गाउँका मानिसहरूले शुभकामना सन्देश दिए। सिराहाका गाविसहरू मध्ये ढोडना, पडरिया, सिस्वनी, वस्तीपुर, सोनमति मझौरा, व्रहमान गोरछारी, भवानीपुर कालावन्जर, तेनुवापट्टि र सितापुरका गरी १६सय घर परिवारले आफैले पढेको शुभकामना रेडियोबाट प्रसारण भएको थियो। गाविसहरूमा समाद एफएमका समाद समूह गाविस समितिहरू रहेका छन्। १६ सय घरपरिवार मध्ये ५ सय घरपरिवारले शुभकामना सन्देश वापत ३ केजीका दरले रेडियोलाई चामल उपलब्ध गराए। यसरी जम्मा भएको १५ सय केजी चामल समाद एफएमले स्थानीय बजारमा रु २५ का दरले विक्री गऱ्यो। यसरी चामल बिक्रिबाट ३७ हजार ५सय रुपैयाँ रेडियोले उठायो।

त्यस्तै विजया दशमी, शुभ दीपावली तथा छठ पर्वका उपलक्ष्यामा शुभकामना आफ्नै स्वरमा प्रसारण गरेवापत ११ सय घरपरिवारले ५ केजीका दरले धान उपलब्ध गराएका थिए। यसरी जम्मा भएको ५५ सय के.जी. धान स्थानीय बजारमा रु. १२ का दरले विक्री गरी ६६हजार रुपैयाँ रेडियोले संलकन गऱ्यो। 'आफ्नै स्वरमा शुभकामना दिउँ रेडियोलाई सहयोग गरौं' भन्ने अभियानमा रु.१५ सय र रु. ५ सय का दरले लाहान स्थित १० वटा सरकारी कार्यालयहरूबाट १० हजार रकम स्रोत सङ्कलन गऱ्यो। यसरी समाद एफएमलाई विजया दशमी, दीपावली तथा छठ पर्व २०६८ को अवसरमा शुभकामना विज्ञापन बापत १ लाख ४३ हजार ५ सय रुपैयाँको सहयोग प्राप्त भएको थियो।

समाद एफएमलाई काठमाडौँमा बसोवास गर्ने सिराहा जिल्लावासीहरूले आफ्नै अवाजमा रेडियोबाट शुभकामना दिने इच्छा जाहेर गरे । लाहान स्थित सरकारी कार्यालयका कर्मचारीको आवाजमा नै शुभकामना प्रसारण भएको स्थानीयबासीले सुने । शुभकामना सुनेपछि स्थानीय समुदायका मानिसहरूलाई पनि आफ्नै आवाजमा शुभकामना दिने इच्छा जाग्यो । यसरी स्थानीय समुदायको इच्छा पूरा गर्न समाद एफएमले शुभकामना विज्ञापन वापत धान चामल सङ्कलन गर्ने निर्णय गऱ्यो । यसका लागि समाद एफएमले रेडियोमा आबद्ध रेडियो सदस्यहरू र आम बुद्धिजीवीहरू बीचमा शुभकामना आदान प्रदान कार्यक्रम २०६८ असोज १५ गते राख्यो । उक्त कार्यक्रममा शुभकामना रेकर्ड गर्ने बिधिका बारेमा समाद एफएमले जानकारी गरायो । दशैं आउनु भन्दा १० दिन अगाडिदेखि शुभकामना सन्देशबारे रेडियोले सूचना जारी गऱ्यो । सन्देशमा आफ्नै आवाजमा दशैं, शुभदिपावली र छठको उपलक्ष्यमा आफ्नै भाषा र स्वरमा शुभकामना दिउँ, हामी तपाईंको शुभकामना प्रसारण गर्छौं भन्ने जानकारी गरायो ।

समुदायका मानिसहरूबीच यो जनचासोको विषय बन्न पुग्यो । साथीभाई, नातागोताका मान्छेहरूको शुभकामना सुने पछि ग्रामीण समुदायमा यो जनचासोको विषय बन्यो । ग्रामीण गाउँबाट समुदायका मानिसहरूले टेलिफोन मार्फत र रेडियोमै आएर आफ्नै आवाजमा शुभकामना रेकर्ड गराए । रेकर्ड गराउन आउनेको रेडियोमा ठूलो भीड जम्मा भयो । त्यस्तै समाद सदस्य मित्रसाथीहरू पनि यस काममा जुर्मुराए । उनीहरूले आ-आफ्नो गाविसका समुदायहरूको आवाजमा शुभकामना रेकर्ड गराउन र शुभकामना उपलब्ध गराउन सहयोग गर्ने प्रतिबद्धता जनाए । यसरी सबै क्षेत्रबाट सहयोग पाएपछि यो अभियानले झनै मूर्त रुप लियो ।

यसरी रेडियोले शुभकामना दिन चाहनेको शुभकामना गाउँ गाउँमा पुगेर सङ्कलन गरी उनीहरूकै आवाजमा प्रसारण गऱ्यो । यो कार्यले रेडियोलाई झन लोकप्रिय बनाएको छ । समुदाय र रेडियोबीचको सम्बन्धमा पनि अपन्त्व बढेको छ ।

# सहकार्यको संस्कृति

२०६४ साल माघ ११ गतेदेखि रेडियो मेन्छ्यायेमको औपचारिक प्रसारण सुरु भयो । सुरुको समयमा रेडियो दैनिक १० घण्टा प्रसारण हुन थाल्यो । तेह्रथुम सदरमुकाम म्याङलुङबाट प्रसारण भएको रेडियोलाई आवश्ययक स्रोत, जनशक्ति, ज्ञान र सीपको समायोजन गरी सञ्चालन गर्नु ठूलै चुनौती थियो । रेडियो सञ्चालनका लागि स्रोत जुटाउनु सबैभन्दा ठूलो चुनौतीको रुपमा खडा भयो । रेडियो सञ्चालक समितिले स्रोत सङ्कलनका लागि स्थानीय निकायसँग सहकार्य गर्ने नीति बनायो । रेडियोले यसका लागि बास्केट फन्डको व्यवस्था गऱ्यो ।

यसका लागि जिल्ला विकास समिति तेह्रथुमको भूमिका सकारात्मक रहयो । रेडियोले सहकार्यको लागि जिल्ला विकास समितिसँग पहल सुरु गऱ्यो । सुरुमा त्यति चासो नदेखाएपनि तत्कालिन स्थानीय विकास अधिकारी बसन्तराज गौतमले रेडियोसँग सम्पूर्ण स्थानीय निकायको सहकार्य गर्ने विषयमा सहमत भए । छलफलका क्रममा रेडियोका लागि एक बास्केट फन्ड (डालोकोष)को व्यवस्था गर्ने र त्यस कोषको संयोजन स्थानीय विकास अधिकारीले गर्ने सहमति भयो । आर्थिक वर्ष २०६५/६६ मा जिल्लाका सबै सरकारी र गैरसरकारी कार्यालयसँग सहकार्य गरी आएको रकम बास्केट फण्डमा राख्ने विषयमा जिल्ला विकास समिति र रेडियो मेन्छ्यायेमबीच सहमति भयो ।

स्थानीय निकायले दिने सम्पूर्ण सेवाहरूको जानकारी सेवाग्राही समुदाय माझ पुऱ्याउने जिम्मेवारी रेडियोको रहयो । जिल्ला विकास समितिका स्थानीय विकास अधिकारी वसन्तराज गौतमको संयोजनमा जिल्लामा क्रियाशिल सम्पूर्ण सरकारी र गैरसरकारी कार्यालयहरूलको संयुक्त बैठक बस्यो । बैठकले सहकार्यको प्रणाली विकास गर्ने काम गऱ्यो । छलफलमा सबै सरकारी र गैरसरकारी कार्यालयहरूको गतिविधिलाई समेटेर एक एक कार्यक्रम उत्पादन र प्रसारण गर्ने समझदारी बन्यो । यसरी कार्यक्रम उत्पादन र प्रसारण गरेबापत सम्बन्धित कार्यालयले रेडियोको डालोकोषमा वार्षिक पाँच/पाँच हजार रुपैया दिने प्रतिबद्धता जाहेर गरे ।

सहकार्यबाट रेडियोको डालोकोषमा १ लाख ५० हजार रूपैयाँ रकमको स्रोत सङ्कलन भयो। रेडियोले यो अभियानलाई स्रोत सङ्कलनसँगै सबै निकायले गर्ने गतिविधि र कार्यक्रमको बारेमा जानकारी प्राप्त गर्ने अवसरका रुपमा लिएको छ। यो क्रम अहिले पनि चलिरहेको छ। यो अभियान तत्कालिन स्थानीय विकास अधिकारी वसन्तराज गौतम तेह्रथुममा रहँदासम्म मात्र निरन्तरता पायो।। त्यसपछिका स्थानीय विकास अधिकारीको कार्यकालमा भने यसले निरन्तरता पाउन सकेन। यो कामलाई स्थानीय विकास अधिकारी खड्गवहादुर चाँपागाईले पूर्णतया अस्वीकार गर्नुभयो। तर जिल्ला स्थित अन्य सरकारी र गैरसरकारी कार्यालयहरू भने रेडियोसँग सहकार्य गरी आफ्ना कार्यक्रम र गतिविधि समुदायसम्म पुर्‍याउने संस्कृति नै बनेको छ। उनीहरूले सिधै रेडियोसँग एकल सम्झौता गरी कार्यक्रम निर्माणमा सहकार्य गरिरहेका छन्। यो क्रमले अहिले पनि निरन्तरता पाइरहेको छ।

रेडियोसँग सिधै सम्झौता गरेर सरकारी कार्यालयहरू घरेलु तथा साना उद्योग विकास समिति, जिल्ला स्वास्थ्य कार्यालय, जिल्ला वन कार्यालयसँगै गैरसरकारी कार्यालयहरू देउराली सोसाइटी, दलित सचेतना समाज (ड्यास), सामुदायिक वन उपभोक्ता जिल्ला महासङ्घ तेह्रथुम, समुदाय सहयोग कार्यक्रम (सिएसपी) लगायतले पहिलो वर्ष देखिको सहकार्यलाई निरन्तरता दिएका छन्।

पहिलो वर्ष स्थानिय विकास अधिकारीको संयोजनमा भएको बैठकका आधारमा हाल पनि उक्त वास्केट फण्डका लागि भनि गत वर्ष सम्म पनि वार्षिक पाँच हजार रुपैयाँ बजेट रेडियोका लागि छुट्टयाउने कार्यले भने निरन्तरता पाइरहेको छ। पछिल्लो आर्थिक वर्षहरूमा जिल्ला विकास समितिको संयोजनमा एक मुष्ट रकम सङ्कलन नभएपनि रेडियोलाई कार्यक्रम उत्पादन र प्रसारण वापत जिल्लामा रहेका सरकारी कार्यालयहरूले रकम उपलब्ध गराइरहेका छन्। यो सहकार्यले स्थानीय निकायसँग रेडियोको सम्बन्ध मजबुत बनाएको छ।

# साझा चौतारीको रुपमा रेडियो

समुदायका मानिसले रेडियोलाई आ-आफ्नै तरिकाले बुझेका हुन्छन् । आ-आफ्नै तरिकाले यसको उपयोग गर्छन् । रेडियोका अनेक किसिमका श्रोता हुन्छन् । यस्तै कामले दाङमा रेडियो स्वर्गद्वारी सबैको साझा चौतारी बनेको छ । रेडियो स्वर्गद्वारी एफएमका एकजना श्रोता पुरन्धारा गाविसका धर्मबहादुर बस्नेतले २०६८ साल वैशाख १ गते रेडियोमा नै आएर नयाँ वर्षमा धुम्रपान र मध्यपान त्याग्न आग्रह गर्दै शुभकामना दिनुभयो । एक पूर्व दुर्व्यशनी प्रकाश रेग्मी ( हाल पत्रकार) ले २०६० साल असोजमा दुर्व्यसनीको कुलतमा फसेकाकोहरू सुधार हुन सक्छ भन्ने सन्देश दिन आफ्नो अन्तर्वार्ता लिई रेडियोमा प्रसारण गर्न अनुरोध गर्नुभयो । अनुरोध अनुरुप नै अन्तर्वार्ता लिएर रेडियोले प्रसारण गर्‍यो ।

२०६२ सालमा देउखुरी खंग्रहवाको शिक्षक रमेश रेग्मी सरुवाका लागि कुरा गर्न जिल्ला शिक्षा कार्यालय घोराही जादा सरुवाका लागि उहाँसँग घुस मागियो । यो प्रकरणलाई रेडियोले समाचारमा प्रसारण गर्‍यो । रेडियोमा प्रसारण भएपछि जिल्ला शिक्षा कार्यालय दाङमा ठूलै हलचल मच्चियो ।

दाङको छिमेकी जिल्ला कपिलबस्तु र बाँकेको सदरमुकाम नेपालगञ्जमा हिन्दु मुश्लिम बीच सामाजिक सद्भाव खलबलिने कार्य हुँदा दाङका मुश्लिमहरू अस्फाक अहमद, साजिदा सिद्धिकी, अब्बाक मो., कल्लु मुसलवान लगायत ३८ जनाले संयुक्त रुपमा सामाजिक सद्भाव कायम गर्न अपिल गर्नुभयो र त्यसलाई रेडियो स्वर्गद्वारीबाट प्रसारण गर्न आग्रह गर्नुभयो । रेडियोले उहाँहरूको अपिल सहितको सन्देश प्रसारण गर्‍यो । सन्देशमा धार्मिक सहिष्णुता सहित सामाजिक सद्भाव कायम राख्न दुवै पक्षलाई अनुरोध गरिएको थियो । नेपालीहरू बीचको एकतालाई धर्मको नाममा विखण्डन नगर्न उल्लेख गरिएको थियो । नेपाली समुदायको एकता कहिले नटुट्ने सन्देश दिइएको थियो ।

किसानलाई बाली लगाउने चटारो भएकै बेलामा मलको अभाव हुन्छ । उनीहरूले रेडियोमा आएर बारम्बार मल नपाएको गुनासो गर्न

आउँछन् । किसानहरूको गुनासोलाई समेटेर रेडियो कार्यक्रम उत्पादन गरी प्रसारण गर्ने गर्छ । वर्षेनी किसानहरूले मलका लागि आन्दोलनमा उत्रिने गरेका छन् । खेती गर्ने समयमा किसानले समयमा मल नपाउँदा कृषि कार्यालय सधैं उनीहरूको घेराबन्दीमा पर्छ । मलको सहज आपूर्तिका लागि राजनीतिक दलहरूको ध्यानाकर्षण गर्न 'रेडियोबाट फुकाउन' भन्दै किसानहरूको ठूलै भीड प्रत्येक वर्ष रेडियोमा लाग्दै आएको छ ।

यसरी सबै समुदायले आ-आफ्नो कामको लागि रेडियो साझा चौतारीको रुपमा प्रयोग भइरहेको छ ।

# रेडियोः नाम एक, काम अनेक

रुपाकोट सामुदायिक रेडियोप्रति सर्वसाधारणको अटुट विश्वास छ । उनीहरू रेडियोले बजाएका कुराहरू पत्याउँछन् । रेडियो उनीहरूका लागि नभइ नहुने साधन भएको छ । रेडियोले समुदायका लागि विभिन्न सामाजिक काम गर्छ । जसले गर्दा रेडियोको उपयोग विभिन्न काममा भइरहेको छ । रुपाकोट सामुदायिक रेडियोको स्थापना भएको पन्ध्र दिन पछि २०६४ साल चैत १५ गते खोटाङ जिल्ला दिक्तेल गाविस वडा नं ४ बस्ने जयप्रसाद आचार्यको बुबाको बिहान ७ बजे निधन भयो । निधनको खबर तुरुन्तै आफन्त र शुभचिन्तक कहाँ एकैपटक पुऱ्याउन त्यती सजिलो भने थिएन । निधनको खबर जानकारी गराउन रुपाकोट सामुदायिक रेडियोमा अनुरोध आयो । रेडियोले निधनको खबर र मलामी जानेबारे सूचना निःशुल्क प्रसारण गऱ्यो । सूचना प्रसारणको १ घण्टा भित्र सदरमुकाम देखि १ घण्टा टाढा रहेका दाजुभाई मृतकको घरमा जम्मा भए । मृतकका छोरा जयप्रसाद आचार्यका अनुसार दाजुभाई जम्मा हुन ४ देखि ५ घण्टा लाग्ने ठाउँमा रुपाकोट सामुदायिक रेडियोको सूचनाले निकै ठूलो सहयोग पुगेको बताउनुभयो ।

यस्तै दिक्तेल गाविस वडा नं ७ बस्ने टिकामाया विश्वकर्माको मृत्यु भयो । मृत्यु भएको १५ मिनेटमा छोरा गंगाबहादुर विश्वकर्माले रुपाकोट रेडियोमा आफ्नो दुखद खबर दाजुभाई इष्टमित्रलाई सुनाईदिन आग्रह

गरे । उनको आग्रहलाई स्विकार्दै रुपाकोट सामुदायिक रेडियोले मलामी जाने सूचना निःशुल्क प्रसारण गऱ्यो । सूचना गरेको एक घण्टामै दाजुभाई, आफन्त र शुभचिन्तकहरू जम्मा भई दाहासंस्कार गर्न सजिलो भएको छोरा गंगाबहादुरको भनाई छ । रेडियोले कसैको निधन भएमा आफन्त र शुभचिन्तक कहाँ खबर गर्ने सन्देश निःशुल्क प्रसारण गर्छ । रेडियोबाट सन्देश प्रसारण हुन थालेपछि मृत्युको खबर नभएर मलामी जान नपाएको भन्ने गुनासो सुनिन नै छोडेको छ ।

दिक्तेल वडा नं ६ मुडे स्थित शेर्पा तथा तामाङ समुदायले २०६५ साल मंसिर महिनामा जिल्लाभरिका लामाहरूको बृहत् भेला बोलाउने निर्णय गरे । जिल्लाभरीका लामा समुदायलाई खबर गर्ने चुनौती खडा भयो । सबैकहाँ सूचना पुऱ्याउने माध्यमको रुपमा उनीहरूले रेडियोलाई रोजे । भेला आयोजकले रुपाकोट सामुदायिक रेडियोलाई स-शुल्क सूचना प्रसारण गरिदिन अनुरोध गरे । यही सूचनाको आधारमा बिना पत्र जिल्लाभरीका ४४ जना लामाहरूको भेला भयो । भेलाले दिक्तेल वडा नं ६ र ७ मा पर्ने गरि एउटा केन्द्रिय गुम्बा निर्माण गर्ने निर्णय गऱ्यो । निर्णय अनुसार दिक्तेल वडा नं ७ मा थेकछोक साम्तेन छोलिङ गुम्बा निर्माण भइसकेको गुम्बा निर्माण समितिका अध्यक्ष दावाफुरी शेर्पाले जानकारी दिनुभयो । हाल रुपाकोट सामुदायिक रेडियोले सबै भेला बैठकका लागि सूचना गरेपछि पत्र काट्नै नपर्ने भएको नेपाल शेर्पा सङ्घ खोटाङका अध्यक्ष एनटी शेर्पाले बताउनुभयो ।

जिल्ला शिक्षा कार्यालयले २०६४ सालको लागि २० जना दलित जातिको शिक्षकको आवश्यकता रहेको सूचना रुपाकोट सामुदायिक रेडियोलाई उपलब्ध गरायो । २०६३ सालमा पनि २० जना दलित जातिको शिक्षक आवश्यकताको सूचना शिक्षा कार्यलयमा टाँस गर्दा आवश्यक सङ्ख्या भन्दा कम दरखास्त परेको थियो । त्यसैले जिल्ला शिक्षा कार्यालयले २०६४ मा रुपाकोट सामुदायिक रेडियोमार्फत सूचना दिने निर्णय भएको तत्कालिन जिल्ला शिक्षा कार्यालयका नायव सुब्बा कटकबहादुर केसीले बताउनुभयो । यसरी सूचना प्रसारण भएपछि करिब ५५ जनाको आवेदन जिल्ला शिक्षा कार्यालयले पऱ्यो ।

समुदायका मानिसहरूको कुनै सामान हराएमा वा कसैले भेट्टाएमा

रेडियोमा खबर गर्ने गरेका छन् । रेडियोले सूचना दिएको भरमा थुप्रै हराएका सामान भेटिएका छन् । हौंचुर गाविस वडा नं ७ का मोहन गरुङको जिल्ला मालपोत कार्यालय आउने क्रममा बाटैमा नागरिकता हरायो । नागरिकता हराएपछि आफ्नो काम नहुने भएपछि उनी घर फर्किए । एक स्थानीय युवाले वाटोमो नागरिकता फेला पारी रुपाकोट रेडियोको कार्यालयमा आएर दिए । रुपाकोट रेडियोले नागरिकता फेला परेको सूचना प्रसारण गऱ्यो । रेडियोबाट सूचना प्रसारण भएपछि नागरिकता भेटिएको जानकारी उनले पाए । उनी रेडियोमा आएर नागरिकता लगायतका कागजातहरू लिएर गए । यस्तै थुप्रै आवश्यक कागजात तथा सामाग्रीहरू हराएमा रुपाकोट रेडियोमा आएर खबर गर्ने, दिने र लाने क्रम चलिरहेको छ । बुईपा वडा नं २ बस्ने स्थानीय चम्पावती उच्च मा.वि व्यवस्थापन समितिका अध्यक्ष दिनेश राईले २०६७ साल मंसिर महिनामा बुईपा देखि दिक्तेल आउने क्रममा मोटरसाईकलको चाबी र मोवाईल फोन हराए । मोवाईल हराएको सूचना रुपाकोट सामुदायिक रेडियोले प्रसारण गऱ्यो । सूचना प्रसारण भएको २ दिन पछि सूचना सुनेको आधारमा दिक्तेल स्थित रुपकोटको रेडियोको कार्यालयमा ती सामान एक स्थानीय व्यक्तिले ल्याइदिए ।

खोटाङ जिल्लामा मान्छे हराएमा हुलिया प्रहरीमा पुग्छ, प्रहरीले रुपाकोट रेडियोलाई सिफारिस गर्छ र मान्छे हराएको सूचना निःशुल्क प्रसारण हुन्छ । खोटाङ जिल्ला पाथेका गाविसबाट ज्ञानमाया राई, युनिशा राई, जमुना राई, लगायत एकजना दलित महिला विद्यार्थी हराएको खबर रुपाकोट सामुदायिक रेडियोमा जानकारी प्राप्त भयो । जानकारी पछि हुलिया प्रसारण गर्दा हराएको भोलि पल्ट चार जनालाई भोजपुरको जरायोटारमा प्रहरीले फेला पाऱ्यो । फेलापरे पछि उनीहरूलाई भोजपुर जिल्ला प्रहरी कार्यालयमा अभिभावक वोलाई उनिहरूको जिम्मा लगाउने काम भयो ।

यसरी रेडियोले समुदायको हितका लागि यस्ता सामाजिक काम निस्वार्थ रुपमा गर्ने गरेको छ ।

## सामुदायिक रेडियो सहयोग केन्द्रको प्रकाशन

**समाज परिवर्तनका लागि सामुदायिक रेडियो २०५८ (सन् २००१)**
-राजेश घिमिरे र घमराज लुईंटेल (सम्पादक)

**सामुदायिक रेडियो प्रसारण निर्देशिका २०५८ (सन् २००१)**
-रघु मैनाली, ओम खड्का, बद्रि पौड्याल र हरिकला अधिकारी

**रेडियो वचन २०५९ (सन् २००२)**
-रघु मैनाली

**नेपालमा सामुदायिक रेडियो २०५९ (सन् २००२)**
-पुष्प अधिकारी

**सामुदायिक प्रशारण : प्रस्तावित कानुन तथा सर्वोच्च अदालतको फैसला २०५९ (सन् २००२)**
-रघु मैनाली (सम्पादक)

A proposed Bill on Community and Non-Commercial Broadcasting 2059 (2002)

**रेडियो कार्यक्रम (सन् २००३)**
-बद्री पौड्याल

**नेपालमा सामुदायिक रेडियो इतिवृत्तान्त २०६१ (सन् २००४)**
-घमराज लुईंटेल र मधु आचार्य

**सामुदायिक रेडियो समस्या र समाधान २०६१ (सन् २००४)**
-रघु मैनाली र राजेश घिमिरे (सम्पादक)

**सामुदायिक रेडियो : रणनीतिक योजना तर्जुमा निर्देशिका २०६१ (सन् २००४)**
-विक्रम सुब्बा र रघु मैनाली

Radio Directory (2004)

**सामुदायिक रेडियो सामूहिक बजारीकरण रणनीति २०६३ (सन् २००६)**
-विक्रम सुब्बा, यादव चापागाईं र रघु मैनाली

Community Radio Strategic Planning Manual 2008 (First English Edition)
-Bikram Subba and Raghu Mainali

Community Radio Collective Marketing Strategy (2008)
-Bikram Subba, Yadhab Chapagain and Raghu Mainali

Radio Pledge (2008)
-Raghu Mainali

Community Radio Principle and Prospectus (2008)
-Raghu Mainali

**रेडियो कार्यक्रम र योजना २०६५ (सन् २००९)**
-भरत भूसाल

**रेडियोमा महिला बोली : भाषा, संवाद र लैङ्गिक शैली २०६५ (सन् २००९)**
-हरिकला अधिकारी

Women in Radio: Language, discourse and gender Perspective (2009) - Nepali
-Harikala Adhikari

Community Radio Performance Assessment System (2009)
-Raghu Mainali, Yadhab Chapagain, Bikram Subba

CR Organization Development Guidebook (2009)
-Raghu Mainali, Yadhab Chapagain, Bikram Subba

What's on Air (2010)
-Binod Bhattarai with Ghanendra Ojha

Communities Challenging Climate Change (2010)
-Madan Koirala and Ranjana Bhatta

Community MHz- Assessing Community Radio Performance in Nepal (2011)

Community MHz II- Assessing Community Radio Performance in Nepal (2012)

